॥ श्रीगणेशायनमः ॥

# सजिलो ज्योतिष सङ्ग्रह
# नेपाली भाषासहित




लेखक तथा संकलन कर्ता

ज्योतिषर्चाय बिष्णु प्रसाद पौडेल

# गणित खण्ड

## पाठ १ समयको र घटीपलको परिभाषा

### समयको परिचय

समय भनेको निरन्तर रुपमा चलिरहने प्रक्रियनै समय भनिन्छ । जस्तै १ घण्टाको ६० मिनेट र १ मिनेटको ६० सेकेन्ड हुन्छ ।

जस्तै घण्टाबाट १ सापट लिदाँ ६० मिनेट हुन्छ । किनभने ६० मिनेटको १ घण्टा हुन्छ । मिनेट बाट १ सापट लिदा ६० सेकेन्ड हुन्छ ।

उदाहरण

१ घण्टा १४ मिनेट ४७ सेकेन्ड

-० घण्टा ४२ मिनट १६ सेकेन्ड

० घण्टा ३२ मिनेट ३१ सेकेन्ड

उदाहरण

१२ घण्टा ४८ मिनेट ३ सेकेन्ड

-२ घण्टा १६ मिनेट ३२ सेकेन्ड

१० घण्टा ३१ मिनेट ३१ सेकेन्ड

### घटी पलको परिभाषा

घटी भनेको ६० पलको १ घटी हुन्छ । त्यसलाई घटी भनिन्छ ।

पल भनेको ६० विपलको १ पल हुन्छ ।त्यसलाई पल भनिन्छ ।

जस्तै २४ घण्टाको ६०/०० हुन्छ । एउटा नक्षेत्र एकदिन भरै हुन ६०/०० चाहिन्छ ।

मानौ १ घटीबाट पलमा १ सापट लिदा ६०+ हुनजान्छ ।

उदाहरण

६०/००

-१६/३६

४३/२४

उदाहरण

६०/००

-१३/५९

४६/०१

---

नोट २४ घण्टाको १ दिन हुन्छ । २४ घण्टालाई ६ घन्टाको १ घडी हुन्छ । त्यसैगरी २४ घण्टाको ४ घडी हुन्छन ।

१ नक्षेत्रको ४ चरण हुन्छन । १ दिन पुरै ६०/०० हुन्छ भन्ने हुदैन । केही नक्षेत्र ६०/०० हुन्छन केही हुदैन्न ।

## पाठ २ स्थानिय सूर्यदय निकाल्ने बिधी

काठमाडौं को देशान्तर सँग स्थानीय देशान्तर घटाउने र आएको लब्धिमा ४ ले गुणा गरी आएको समयलाई मिनेट सेकेन्डमा रूपान्तर गरी काठमाण्डौंको सूर्यदयमा (काठमाण्डौं देखीका पूर्वका जिल्लाहरू छन भनि घटाउने ) यदि काठमाण्डौ देखी पश्चिमका जिल्लाहरू छन भने जोडनु पर्छ ।

उदाहरण

जन्म मिती २०५९/१२/२४ गते सोमवार वेलुका ६:०० जाँदा अर्घाखाँची भएको हो ।

त्यसदिन काठमाण्डौंको सूर्यदय विहान ५:५०:२१ छ ।

काठमाण्डौको देशान्तर ८५/१९

अर्घाखाँचीको देशान्तर -८३/८

२/११

× ४

८/४४

काठमाण्डौको सूर्यदय ५:५०:२१

स्थानिय समयान्तर +: ८:४४

५:५९:५ अर्घाखाँची सूर्यदय

नोट नेपालको समय गौरीशंकर हिमालको आधारमा निर्धारण गरिएको छ । अहिले नेपाल पञ्चाङ्ग निणाक समित बाट पारित भएका पात्रोमा हामीले स्थानिय सूर्यदय निकाल्न देशान्तर सस्कार गरे पुग्छ ।

पूरानो पात्रोहरूमा गोरीशंकर हिमालको आधारमा गरिएको पाइन्छ । त्यसको लागि गौरीशंकरो देशान्तरलाई ४ ले गुणा गरी घण्टा मिनेट सेकेन्डमा लगी जातक जनम भएको जिल्लाको देशान्तरलाई ४ ले गुणा गरी घण्टा मिनेट सेकेन्डमा लगी घटाउने र गौरीशंकर हिमाल देखी पुर्वका जिल्लामा + चिन्ह दिने पश्चिमका जिल्लाहरूमा - चिन्ह दिने र गौरीशंकरको सूर्यदयमा जातक जनम भएको जिल्लाको मिनेट सेकेन्डमा - चिन्ह छ भने जोडने + चिन्ह छ घटाउनुपर्छ अर्थात उल्टो सस्कार गर्ने अनि स्थानिय सूर्यदय आउन्छ ।

पाठ ३ इस्टकाल निकाल्ने बिधी

इस्टकाल भनेको सूर्यदय देखी समय सम्मको घटद्यादि काल लाई इस्टकाल भनिन्छ ।

## इस्टकाल निकाल्ने विधिहरू

१) विहानको सूर्यदय देखी मध्यान्द १२:५९ सम्मको अविधीमा सूर्यदयले जन्म समय घटाई आएको लब्धिलाई ५ ले गुणा गरी २ ले भाग गरी आएको लव्धि इस्टकाल हो ।

२) दिउँसको १ बजे देखी मध्य रातिको १२:५९ सम्म जन्म समयमा १२ जोडने र सर्यदयले घटाई आएको लब्धिलाई ५ ले गुणा गरी २ ले भाग गरी आएको लव्धि इस्टकाल हो ।

३) रातिको १ बजे देखि अर्को दिनको सुर्यदय नहुन तक जन्म समयमा २४ जोडने र सर्यदयले घटाई आएको लब्धिलाई ५ ले गुणा गरी २ ले भाग गरी आएको लव्धि इस्टकाल हो ।

उदाहरण

जन्म मिती २०५९/१२/२४ गते सोमवार वेलुका ६:०० जाँदा अर्घाखाँची भएको हो । सूर्यदय ५:५९

जन्म समय वेलुका ६:००

शूत्र अनुसार +१२

१८:००

सूर्यदय -५:५९

१२:०१

× २.५

३०:०२:३०

अर्धाधिके एकं गृहात अनुसार यदि विपल ३० भन्दा बढि भएको खण्डमा पलमा १ थपनुर्छ ।

३०/०३ अर्धाधिके एकं गृहात अनुसार

३०/०३ इस्टकाल

नोट हामीले इस्टकाल निकाल्नको पूर्वनै हामीले देशान्तर सस्कार गरेको हुनुपर्छ ।

इस्टकाल हामीले अर्को चरणबाट निकाल्न सक्छम शुत्र अनुसार जन्म समय र सूर्यदयले घटाउने र आएको लव्धिको जतिको त्यति लेखी त्यसको आधा गरी जोडेर निकाल्न सकिन्छ ।

हामिले इस्टकाल निकाल्नको लागी(Scientific Calulator) मा DMS को प्रयोग गरी निकाल्न सकिन्छ ।

## पाठ ४ भयात र भभोग

भयात निकाल्ने बिधि

६० ओहोरात्रमा गत नक्षत्र घटाएर वर्तमान नक्षत्र जोडेर आएको लब्धि नै भयात भनिन्छ ।

सूत्र:- ६०:०० - गत नक्षत्र + ईस्टकाल= भयात

उदाहरण ईस्टकाल ३०/०३ गत नक्षत्र रोहिणी १०/५६ वर्तमान नक्षत्र मृगशीरा १५/३०

६०:०० ओहोरात्र

-१०:५६ गत नक्षत्र

--------------

४९:०४

+३०:०३ ईस्टकाल

-------------

७९:०७ नोट भयात निकाल्दा ६० भन्दा बढी आएको खण्डमा ६० घटाउनुपर्छ ।

-६०

---------

१९:०७ भयात

भभोग निकाल्दा

६०:०० ओहोरात्रमा गत नक्षत्र घटाएर वर्तमान नक्षत्र जोडेर आएको लब्धि नै भभोग हो ।

सुत्र :- ६०:०० - गत नक्षत्र+ वर्तमान नक्षत्र= भभोग

उदाहरण ईस्टकाल ३०/०३ गत नक्षत्र रोहिणी १०/५६ वर्तमान नक्षत्र मृगशीरा १५/३०

६०:०० ओहोरात्र

-१०:५६ गत नक्षत्र

--------------

४९:०४

+१५:३० वर्तमान नक्षत्र

------------

६४:३४ भभोग

नोट भभोग निकाल्दा ६० भन्दा बढी आएको खण्डमा - ६० गर्नुपर्दैन ।

भभोग लाई चार ले भाग गरेरे आएको लब्धि प्रथम चरण हुन्छ | त्यसैगरी प्रथम चरण + प्रथम चरण =द्वितीय चरण हुन्छ | द्वितीय चरण + प्रथम चरण= तृतीय चरण हुन्छ | तृतीय चरण + प्रथम चरण =चतुर्थ चरण हुन्छ | र भयात यिनि चार चरण मध्ये जुन चरण सँग भयात घट्दछ त्यही चरण बाट नाम आउन्छ | जसलाई नामकरण विधि पनि भनिन्छ |

सुत्र:- भभोग ÷४ = प्रथम चरण ×४ = चतुर्थ चरण मध्ये जुन चरण सँग भयात घट्दछ त्यही चरण बाट नाम आउन्छ |

उदाहरण

भयात :- १९/०७

भभोग:- ६४/३४

६४/३४ ÷४ = १६/०८/३० प्रथम चरण

१६/८/३०+१६/८/३० = ३२/१७ द्वितीय चरण

३२/१७ + १६/८/३० = ४८/२५/३० तृतीय चरण

४८/२५/३०+१६/०८/३०= ६४/३४ चतुर्थ चरण

नियम:- माथि का चतुर्थ चरण मध्ये जुन चरण भित्र भयात घट्दछ | इस्ट दिनको उत्त चरण देखी नै नाम राख्नु |

हाम्रो भयात १९/०७ भएको ले द्वितीय चरण मा घट्दछ | त्यसैले इस्ट नक्षेत्र मृगशीरा को द्वितीय चरणको वो देखि नाम रहन गयो |

scientific calculator प्राप्त गर्ने तरिका

हामीले scientific calculator play store मा गएर download गर्न सकिन्छ | अथवा बजार गएर पनि खरिद गर्न सकिन्छ |

अब प्रयोग गर्ने तरिका

१) सुरुमा calculator खोल्नुहोस् र भयातको घटी लेख्नु र अब calculator मा भएको ° ' " यो बटनको प्रयोग गर्नुहोस् र पल पनि लेख्नु होस पुन ° ' "

बटनको प्रयोग गरी चारले भाग हेर्नुहोस र आएको लब्धि प्रथम चरण हुन्छ | यसरी

हामीले DMS को प्रयोग गर्न सकिन्छ |

D को अर्थ डिग्री

M को अर्थ मिनेट

S को अर्थ सेकेन्ड हुन्छ |

पाठ ६ चन्द्र स्पष्ट

चन्द्र स्पष्ट

ईस्ट समयको भयातलाई ६० ले गुणा गर्नु आएको फललाई भभोग ले भाग गर्नु | प्राप्त अंक लब्धि हुनेछ |

अब गत नक्षेत्र संख्यालाई ६० ले गुणा गरि माथिको लब्धि जोडने | प्राप्त अंकलाई २ ले गुणा गरि ९ ले भाग दिनु भाग फल अंश कला विकलामा हुनेछ |

अब अंशलाई ३० ले भाग गर्नु भाग फल राशि शेष अंध तथा कला विकला माथिको हुनेछ |

- Scientific calculator सुत्र:- भयात ×६०÷भभोग= लब्धि
- गत नक्षेत्र संख्या ×६०+ लब्धि ×२÷९ अंशादी |
- अंश ÷ ३० = राशि शेष

१.उदाहरण :- भयात×६०÷भभोग = लब्धि

भयात= १९/०७

भभोग=६४/३४

गत नक्षेत्र संख्या= ४

१९/०७ भयात

×६०

-------

११४०

+७ पल

--------

११४७

= ११४७÷६४/३४ = १७/४५/५३

२

उदाहरण अंशादि गत नक्षेत्र संख्या ×६०+लब्धि ×२÷९ = अंशादि

गत नक्षेत्र= ४×६०

=२४०

+१७/४५/५३

-------------------

२५७/४५/५३

२५७/४५/५३

×२

----------------------

५१४/९०/१०६

९)५१४( ५७/१६/५३

३ उदाहरण राशि, अंश÷३० भागफल राशि शेष अंश

३०)५७(१ राशि

-३०

----------

२७ शेष

१/२७/१६/५२ चन्द्र स्पष्ट

चालन निकाल्ने सटिक तरिका

पात्रोमा ७-७ दीन को स्पष्ट चक्र दिएको हुन्छ । जातक जन्म भएको नजिक को पात्रो स्पष्ट लिई चालन बनाउनुपर्छ ।।

शुत्र

- यदि इस्ट दिनादि ठुलो भएमा पात्र को दानादि सानो भएमा धन चालन आउन्छ
- इस्ट दिनादि सानो र पात्रो दिनादि ठुलो भएमा ऋण चालन आउन्छ

उदाहरण

वि सं २०५९ चैत्र २४ गते सोमबार इस्टकाल ३०/०३

पात्रोमा भएको स्पष्ट दिनादि चैत्र २३ गते आईतबार ०२/११

२४/३०/०३ इस्ट दिनादि

- २३/०२/२१ पात्रो दिनादि

-------------

१/२७/४२ धन चालन

पाठ ७ ग्रह स्पष्ट

ग्रह स्पष्ट

सूत्र:- चालन × ग्रहको गति ÷६० = लब्धि अंशादि

= अब पात्रोमा भएको स्पष्ट सँग अंशादि स्पष्ट ऋण चालन छ वक्री पनि छ भने जोड्नुपर्छ मार्गीमा घटाउनुपर्छ ।

= यदि धन चालन छ भने वक्री घटाउनुपर्छ मार्गी मा जोड्नुपर्छ ।

सुर्य स्पष्ट

उदाहरण:- पात्राको सुर्य स्पष्ट ११/२१/५३/३९ सुर्यको गति ५९/३

चालन = १/२७/४२ × ५९/३ ÷ ६०

= १/२६/१९ अंशादि

पात्राको स्पष्ट सुर्य= ११/२१/५३/३९

+ १/२६/१९ अंशादि

---------------------------

११/२३/१९/५८ सुर्य स्पष्ट

मंगल स्पष्ट ( मार्गी)

उदाहरण :- पात्राको मंगल स्पष्ट ८/२३/३८/२६ मंगलको गति ३५/५३

चालन= १/२७/४२ × ३५/५३ ÷६०

= ०/५२/२७ अंशादि

पात्राको स्पष्ट मंगल = ८/२३/३८/२६

+ ०/५२/२७ अंशादि

----------------------

८/२४/३०/५३ मंगल स्पष्ट

## बुध स्पष्ट (मार्गी)

उदाहरण:- पात्राको बुध स्पष्ट ०/६/२२/० बुधको गति ८८/१८

चालन = १/२७/४२ ×८८/१८ ÷६०

=२/९/४ अंशादि

पात्राको स्पष्ट बुध = ०/६/२२/०

+२/९/४ अंशादि

-------------------

०/८/३१/४ बुध स्पष्ट

## वृहस्पति स्पष्ट (मार्गी)

उदाहरण:- पात्राको वृहस्पति स्पष्ट ३/१४/५१/२० वृहस्पतिको गति ०/४५

चालन= १/२७/४२ ×०/४५ ÷६०

=०/१/६ अंशादि

पात्राको स्पष्ट वृहस्पति ३/१४/५१/२०

+ ०/१/६ अंशादि

--------------------

३/१४/५२/२६ वृहस्पति स्पष्ट

## शुक्र स्पष्ट (मार्गी)

उदाहरण:- पात्राको शुक्र स्पष्ट १०/१८/९/६ शुक्रको गति ७२/५२

चालन = १/२७/४२ ×७२/५२ ÷६०

= १/३१/५४ अंशादि

पात्राको स्पष्ट शुक्र १०/१८/९/६

+ १/३१/५४ अंशादि

------------------------

१०/१९/४१/० शुक्र स्पष्ट

## शनि स्पष्ट (मार्गी)

उदाहरण:- पात्राको स्पष्ट शनि १/२९/५१/२५      शनिको गति ४/११

चालन = १/२७/४२ × ४/११ ÷ ६०

= ०/६/७ अंशादि

पात्राको स्पष्ट शनि १/२९/५१/२५

+ ०/६/७

--------------------------

१/२९/५७/३२ शनि स्पष्ट

## राहु स्पष्ट (वक्री)

उदाहरण :- पात्राको स्पष्ट राहु १/७/५९/४१      राहुको गति ३/११

चालन= १/२७/४२ × ३/११ ÷६०

= ०/४/३९ अंशादि

पात्राको स्पष्ट राहु १/७/५९/४१

- ०/४/३९ अंशादि

---------------------

१/७/५५/२ राहु स्पष्ट

केतु स्पष्ट (वक्री)

राहु स्पष्ट भएको मा +६ राशि जोडेर आएको लब्धि नै केतु स्पष्ट हुन्छ ।

१/७/५५/२ राहु स्पष्ट

+६

--------------------

७/७/५५/२ केतु स्पष्ट

पाठ ८ प्रथम लग्नसारणी स्पष्ट

१) प्रथम तरिका

सूत्र:- सूर्यको स्पष्ट राशि प्रथम लग्नसारणी गएर हेर्ने |उत्त स्पष्ट सूर्यको राशि र अंशका बिचमा पर्ने प्रथम लग्नसारणी बाट ल्याई इस्ट घटीपलमा जोडने | यसैगरी उत्त बिचमा पर्ने पूर्वपर कोष्ठको अन्तर निकालि स्पष्ट सूर्यको कला र विकलाले गुणा गरि ६० ले भाग गरेर आएको विकलादि मान पनि इस्ट जोडिएको अंकमा जोडने र आएको योगफल पुनः प्रथम लग्नसारणी गएर खोज्ने | यसरी उक्त योगफल ( माथि इस्ट जोडेर आएको योगफल ) प्रथम लग्नसारणी को जुन कोठामा पर्छ सोही कोठाको राशि र अश जे स्पष्ट छ लग्नको पनि सोहि राशि र अंश हुन्छ |

कला र विकला निकाल्न विशेष विधि अपनाउनु पर्छ | प्रथम लग्नसारणीमा हामीलाई चाहिएको (माथि बताएको योगफल) अंक भन्दा पहिलो र पोछिका कोठाका अंकको अन्तर कोष्ठान्तर हुन्छ | यसैगरी योगफल बाट चाहिएको भन्दा कम(गत/पुर्व/पहिलेको) कोष्ठको अंक घटाउने मान्नतर हुन्छ | यसपछि मान्नतरलाई ६० ले गुणा गरी कोष्ठान्तर ले भाग गर्ने र स्पष्ट लग्नको कला र विकला आउन्छ |

उदाहरण

२०५९ चैत्र २४ गते सोमबार सायं ६:०० वादन समय जन्मस्तदात्र

इस्टकाल = ३०/३ स्पष्ट सुर्य= ११/२३/१९/५८

स्पष्ट सूर्यको राशि र अंशका बिचको प्रथम लग्नसारणी प्राप्त मान = १/५९ घ.प |

११ र २३ को अन्तर १/५९ भयो | त्यसपछि १९/५८ को पनि अन्तरको अनुपात गरेर ल्याउनुपर्छ |

अब सुर्यको राशि र अंश को बिचमा प्राप्त भएको घ. प र त्यसको बिचको प्राप्त भएको घ.प घटाउने र पलादि कोष्ठान्तर आउन्छ |

= २/६

-१/५९

----------------

०/७ अतः पलादिमानम् कोष्ठान्तर ०/७ हुन्छ

पलादिमान् = (कोष्ठान्तरम् × स्पष्ट सूर्यकलादिमानम् ÷ ६०)

= (०/७ × १९/५८ ÷ ६०)

= ०/२/२०

अत्र कोष्ठान्तर १/५९/००

+०/२/२०

-------------------

२/१/२०

अब इस्ट घ.प सँग जोडने

२/१/२०

\+ ३०/०३/००

-----------------------

३२/४/२०

३२/४ अब पुनः प्रथम लग्नसारणी गएर खोज्ने यदि ठिक ३२/४ नभेटिएको खण्डमा ३२/४ भन्दा मुनी लिने

हामीले खोज्दा ५ राशि १७ अंश प्राप्त गरिम

अब हामी ठिक ३२/४ नभेटिएको भएर ३२/३ प्राप्त गरिम र त्यसका सिधा ३२/१४ प्राप्त गरिम |

अब ३२/१४ मा ३२/४ घटाउने

कोष्ठान्तर = ३२/१४

-३२/३

------------

०/११

अब हामीले इस्ट घडी जोडेर निकालेको सँग पञ्चाङ्ग मा प्राप्त भएको घ. प घटाउने र मान्नतर आउन्छ |

मान्नतर = ३२/४/२०

\- ३२/३/०

--------------

०/१ /२०

अब सूत्र:- (मान्नतर ×६० ÷कोष्ठान्नतर )

= १/२० ×६० ÷११

=७/१६/२१

यसमा हामीले scientific calculator को DMS प्रयोग गरी गरेका छम

नोट हामीले हिसाब गर्दा ० लाई त्यागी हिसाब गरेका छम र हजुर प्रतिकला पनि त्याग गर्न सक्नुहुन्छ| हामीले पनि प्रतिकला त्याग गरेका छम |

लग्न स्पष्ट = ५/१७/७/१६ हुन्छ

२) दोस्रो तरिकाबाट प्रथम लग्नसारणी स्पष्ट

सुत्रः- सूर्यको स्पष्ट राशि र अंश गएर प्रथम लग्नसारणी खोज्ने । र  त्यहाँ प्राप्त भएको घ.प लिने , र इस्टकाल सँग जोडने र प्राप्त गरेकाे घ.प  पुनः लग्नसारणी गएर खोज्ने र त्यहाँ र त्यसका सिधा राशि को नाम लेखेको राशि हुन्छ अंश लेखेको अंश र हाम्रीले ठिक घ. प प्राप्त गरेकाे छैनम भा त्यस भन्दा कम घप लिने र लग्न स्पष्ट हुन्छ ।

उदाहरण

२०५९ चैत्र २४ गते सोमबार सायं ६:०० वादन समय जन्मस्तदात्र

इस्टकाल = ३०/३      स्पष्ट सुर्य=  ११/२३/१९/५८

स्पष्ट सूर्यको राशि र अंशका बिचको प्रथम लग्नसारणी प्राप्त मान = १/५९  घ.प

अब प्राप्त मान सगँ इस्टकाल जोडने

३०/३ इस्टकाल

+१/५९ प्रथम लग्नसारणी प्राप्त मान

____

३२/०२

अब पुनः प्रथम लग्नसारणी गएर इस्टकाल जोडेरे प्राप्त भएको घ.प

हाम्री त्यहाँ ५ राशि १६  अंश  ३१ कला ५१ विकला प्राप्त गरिम

नोट :- प्रथम तरिका बाट लग्न स्पष्ट गर्दा चाहि पुर्ण रुप मान्य हुन्छ ।दोस्रो तरिकाबाट  स्पष्ट गर्दा १ अंशको तल माथि हुनु सक्छ ।

ग्रह स्पष्ट तालिका

| | लग्न | सूर्य | चन्द्र | मंगल | बुध | बृहस्पति | शुक्र | शनी | राहु | केतु |
|---|---|---|---|---|---|---|---|---|---|---|
| राशी | ५ | ११ | १ | ८ | ० | ३ | १० | १ | १ | ७ |
| अंश | १७ | २३ | २७ | २४ | ८ | १४ | १९ | २९ | ७ | ७ |
| कला | ७ | १९ | १६ | ३० | ३१ | ५२ | ४१ | ५७ | ५५ | ५५ |
| बिकला | १६ | ५८ | ५२ | ५३ | ४ | २६ | ० | ३२ | २ | २ |

लग्न कुण्डली भोर्दा १ राशि बढाएर भोर्नुपर्दछ | जस्तै ० राशि छ भने मेष राशी हुन्छ | ११ राशि छ भने मीन राशि हुन्छ | लग्न कुण्डली को प्रथम घर लग्न को आधारमा भोरिन्छ | जस्तै लग्न ५ राशि छ भने १ जोडेर ६ कन्या राशि बाट सुरु गरिन्छ छ | कुण्डली भोर्दा घडी विपरित दिशाबाट भोर्दै आउनुपर्छ | ६ ७ ८ गरी १२ राशि भएपछि १ बाट सुरु हुन्छ |

### लग्न कुण्डली भोर्ने तरिका

लग्न कुण्डली भोर्दा १ राशि बढाएर भोर्नुपर्दछ | जस्तै ० राशि छ भने मेष राशी हुन्छ | ११ राशि छ भने मीन राशि हुन्छ | लग्न कुण्डली को प्रथम घर लग्न को आधारमा भोरिन्छ | जस्तै लग्न ५ राशि छ भने १ जोडेर ६ कन्या राशि बाट सुरु गरिन्छ छ | कुण्डली भोर्दा घडी विपरित दिशाबाट भोर्दै आउनुपर्छ | ६ ७ ८ गरी १२ राशि भएपछि १ बाट सुरु हुन्छ |

## लग्न कुण्डली



## चन्द्र कुण्डली (राशि कुण्डली)

चन्द्रमा प्रथम भावमा आउने र त्यहाँ बाट अरु ग्रह पनि आफ्नो राशिमा बस्ने प्रक्रिया नै चन्द्र कुण्डली हो । जसलाई राशि कुण्डली पनि भनिन्छ । चन्द्रमा जुन राशिमा वस छ त्यो व्यक्तिको त्यहि राशि हुन्छ ।



# सूर्य कुण्डली

सुर्य प्रथम भावमा आएर बस्ने प्रक्रिया नै सुर्य कुण्डली हो | सुर्य जति अंकमा गएर बस्छ त्यो व्यक्तिको जन्म महिना त्यही हुन्छ |



# नवमांश कुण्डली

एक राशिको नवम भावलाई नवमांश भनिन्छ ।

मेष सिंह धनु = मेष देखि गणना गर्नु १/२/३/४/५/६/७/८/९/१०/११/१२

वृष कन्या मकर = मकर देखि गणना गर्नु १०/११/१२/१/२/३/४/५/६/७/८/९

मिथुन तुला कुम्भ= तुला देखि गणना गर्नु ७/८/९/१०/११/१२/१/२/३/४/५/६

कर्कट वृश्चिक मीन = कर्कट देखि गणना गर्नु ४/५/६/७/८/९/१०/११/१२/१/२/३

नवमांश कुण्डली ९ भावका केही अंश हरु

०/०/१ देखि ३/२०/० प्रथम

३/२०/१ देखि ६/४०/० दोस्रो

६/४०/१ देखि १०/००/०० तेस्रो

१०/००/० देखि १३/२०/० चतुर्थ

## नवमांश ज्ञान तालिका

| अंशा | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कूम्भ | मीन | अंशा |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ३/२० | १ | १० | ७ | ४ | १ | १० | ७ | ४ | १ | १० | ७ | ४ | ३/२० |
| ६/४० | २ | ११ | ८ | ५ | २ | ११ | ८ | ५ | २ | ११ | ८ | ५ | ६/४० |
| १०/०० | ३ | १२ | ९ | ६ | ३ | १२ | ९ | ६ | ३ | १२ | ९ | ६ | १०/०० |
| १३/२० | ४ | १ | १० | ७ | ४ | १ | १० | ७ | ४ | १ | १० | ७ | १३/२० |
| १६/४० | ५ | २ | ११ | ८ | ५ | २ | ११ | ८ | ५ | २ | ११ | ८ | १६/४० |
| २०/०० | ६ | ३ | १२ | ९ | ६ | ३ | १२ | ९ | ६ | ३ | १२ | ९ | २०/०० |
| २३/२० | ७ | ४ | १ | १० | ७ | ४ | १ | १० | ७ | ४ | १ | १० | २३/२० |
| २६/४० | ८ | ५ | २ | ११ | ८ | ५ | २ | ११ | ८ | ५ | २ | ११ | २६/४० |
| ३०/०० | ९ | ६ | ३ | १२ | ९ | ६ | ३ | १२ | ९ | ६ | ३ | १२ | ३०/०० |

उदाहरण:- अगाडि को ग्रह स्पष्ट तालिका बाट लग्न स्पष्ट ५/१७/७/१६ लिई सारणीमा हेर्दा + १ राशि कन्या र १७ अंश र ७ कला ३ राशिमा मिल्यो त्यसैले ३ राशि भयो | यहि प्रक्रिया बाट ग्रह साधन गर्नुहोस | स्पष्ट को राशि मा २ बढाई सारणीमा खोज्नुहोस् |

## नवमांश कुण्डली



सार्वत्रिक दशम लग्न स्पष्ट गर्नको लागी हामीले इस्टकाल सुर्य स्पष्ट लग्न स्पष्ट गरिसकेको हुनुपर्छ | अब हामीले सार्वत्रिका दशम लग्नसारणी गएर सुर्यको राशि र अंश खोज्ने र त्यहाँ प्राप्त गरेको घ प एक साइट मा गएर लेख्ने | यसैगरी त्यहाँ प्राप्त गरेको घ. प र त्यसका मुनि प्राप्त गरेको घप दुबै घटाउने र आएको लब्धिमा सुर्यको कला र विकला ले गुणा गर्ने र हामीले अधि ( सुर्यको राशि र अंश खोज्दा) प्राप्त भएको घ प लेखेको ठाउँमा गएर लेख्ने | अब हामीले दिनमान चाहिन्छ र दिनमानलाई आधा गर्ने वा २ ले भाग गर्ने | र इस्टकाल सँग दिनमान घट्दछ भने त्यो पश्चिम नट आउन्छ | जसलाई (+) चिन्ह दिइन्छ | यदि दिनमान सँग इस्टकाल घट्दछ भने पूर्व नट आउन्छ | जसलाई (-) चिन्ह दिइन्छ | र पुर्व नट छ भने घटाउनुपर्छ र पश्चिम नट छ छ भने जोड्नुपर्छ | र आएको लब्धिमा सार्वत्रिक दशम लग्नसारणी गएर खोज्ने र त्यहाँ प्राप्त गरेको राशि अंश लिने र त्यहाँ हामीले ठिक घ.प प्राप्त गरिम भने त्यो कला र विकला हुन्छ | यदि ठिक प्राप्त नगरेको खण्डमा हामीले इस्टकाल सँग जोडेर वा घटाएर प्राप्त गरेको लब्धि सँग घटाउने र त्यहाँ प्राप्त गरेको घ. प र त्यसका मुनि प्राप्त गरेको घ प घटाउने र आएको लब्धिलाई भाग गर्ने र आएको लब्धिनै कला र विकला हुन्छ | यसरी हामीले सार्वत्रिक दशम लग्नसारणी स्पष्ट गर्न सकिन्छ |

उदाहरण:- इस्टकाल ३०/३ सुर्य स्पष्ट ११/२३/१९/५८ दिनमान ३१/१०

अब पञ्चाङ्ग मा भएको सार्वत्रिका दशम लग्नसारणी गएर सुर्यको राशि र अंश खोज्ने र त्यहाँ प्राप्त गरेको घ प छुट्टै एक ठाउमा लेख्ने | त्यहाँ लखिसके पछि फेरि छुट्टै ठाउँ पुनः लेख्न र त्यसका मुनि भएको घ प घटाउने र सुर्यको कला र विकला गुणा गर्ने |

- त्यहाँ खोज्दा हामीले २/४१ प्राप्त गरिम र त्यसका मुनि २/५० प्राप्त गरिम

= २/४१

= - २/५०

------------

०/९ प्राप्त भयो

अब ०/९ लाई सुर्यको कला र विकला ले गुणा गर्ने

= ०/९ ×१९/५८

= २/५९/४२

अब हामीले दिनमानलाई २ ले भाग गर्ने

३१/१०÷२ = १५/३५ दिनार्ध

अब हामीले नत निकाल्नको लागी इस्टकाल सँग दिनमान घट्दछ भने पश्चिम नत आउन्छ | यदि दिनार्ध सँग इस्टकाल घट्दछ भने पूर्व नट आउन्छ | पुर्व नत छ भने घटाउनुपर्छ पश्चिम नत छ भने जोड्नुपर्छ |

अतः इस्ट सँग दिनार्ध घट्दछ त्यसैले हाम्रो पश्चिम नत आउन्छ |

अतः इस्ट सँग दिनार्ध  घट्दछ त्यसैले हाम्रो पश्चिम नत आउन्छ ।

३०/०३ इस्टकाल

-१५/३५ दिनार्ध

---------------

१४/२८  पश्चिम नत

अब हामीले सुरु प्राप्त गरेको घ प लिने र हामीले ०/९ लाई सुर्यको कला र विकला गुणा गरेको लिने र त्यहाँ प्राप्त गरेको नत लिने पश्चिम नत छ भने जोड्नुपर्छ र पूर्व नट छ भने घटाउनुपर्छ ।

सुरु को घडि पल      = २/४१

गुणा गरेरे निकालेको = २/५९/४२

नत = पश्चिम  = +१४/२८

----------------------

२०/०८/४२

अब यो पुनः सार्वत्रिक दशम लग्नसारणी गएर खोज्ने

हामीले त्यहाँ खोज्दा ठिक २०/०८ प्राप्त नभएकाले त्यस भन्दा कम लियौं २०/६ प्राप्त भयो भने हामीलाई ३ राशि ४ अंश प्राप्त भयो ।

अब हामीले २०/८/४२ मा त्यहाँ प्राप्त गरेको २०/६ घटाउनुपर्छ

२०/८/४२

-२०/६/०

----------

०/२/४२ प्राप्त गरिम

अब त्यहाँ प्राप्त भएको घडी पल र त्यसका मुनि प्राप्त गरेको घडी पल दुबै घटाउने

२०/१६

-२०/०६

-------------

०/१०

अब हामीले ० लाई छोडी २/४२ लाई १० ले भाग गर्दछम

२/४२ ÷ १०

= ०/१६/१२ प्राप्त भयो

३/०४/०/१६ दशम लग्नसारणी स्पष्ट

भाव चलित कुण्डली निर्माण

प्रथम लग्नमा + ६ राशि जोडदा सप्तम भाव दिन्छ |दशम लग्नमा+ ६ राशि जोडदा चतुर्थ भाव दिन्छ | चतुर्थ भाव हामीले प्रथम लग्नमा घटाएर र राशिलाई अंशमा लगेर ÷६ ले भाग गरेर त्यसले हामीलाई प्रथम षष्टाव्य दिन्छ | प्रथम षष्टाव्यमा ३०:००:०० घटाएर यसले हामीलाई द्वितीय षष्टाव्य दिन्छ | प्रथम लग्नमा प्रथम षष्टाव्य + ६ चोटी जोडेर हामीलाई चतुर्थ भाव दिन्छ | त्यसैगरी आएको लब्धिमा द्वितीय षष्टाव्य + ७ चोटी जोडेर हामीलाई सप्तम भाव दिन्छ | त्यसैगरी आएको लब्धिमा प्रथम षष्टाव्य + ६ चोटी जोडेर हामीलाई दशम भाव दिन्छ| र त्यसका+६ चोटी द्वितीय षष्टाव्य जोडेर यसले हामीलाई द्वादशको भावको साथ प्रथम भावको सम्धि दिन्छ |

• १ राशि ३० अंश हुन्छ भने चलित कुण्डली १५ अंश कोठ प्रथम भावको मध्य हुन्छ |

उदाहरण

प्रथम लग्न :- ५/१७/७/१६

+६

-----------------

सप्तम भाव ११/१७/७/१६

दशम लग्न:- ३/४/०/१६

+६

----------------

चतुर्थ भाव ९/४/०/१६

अब चतुर्थ भावलाई प्रथम लग्नले घटाउने

चतुर्थ भाव ९/४/०/१६

प्रथम लग्नमा -५/१७/७/१६

--------------------

३/१६/५३/०

यो चाहि हाम्रो प्रथम लग्न देखि चतुर्थ भाव तक ( दुरी) हुन्छ अब हामी अंशमा लैजानुपर्छ |

१ राशि ३० अंशको हुन्छ भने १२ राशि ३६० अंशको हुन्छ | यहा हामो ३ राशि भएकाले | ३०×३=९० अंश+ १६ = १०६/५३/० हुन्छ | अब आएको लब्धिमा ÷ ६ ले भाग गर्ने र त्यसले हामीलाई प्रथम षष्टाव्य दिन्छ र ३०/००/०० यसमा प्रथम षष्टाव्य घटाएर द्वितीय षष्टाव्य दिन्छ |

१०६/५३/० ÷ ६ = १७/४८/५० प्रथम षष्टाव्य

१०६/५३/० ÷ ६ = १७/४८/५० प्रथम षष्टाव्य

३०/००/००

-१७/४८/५०

--------------------

१२/११/१० द्वितीय षष्टाव्य

प्रथम लग्न ५/१७/७/१६ दशम लग्न ३/४/०१६ प्रथम षष्टाव्य १७/४८/५०
द्वितीय षष्टाव्य १२/११/१०

अब प्रथम लग्न मा प्रथम षष्टाव्य ६ चोटी जोडेर चतुर्थ भाव निकाल्छम

प्रथम लग्न ५/१७/७/१६

प्रथम षष्टाव्य + १७/४८/५०

-------------------

६/०४/५६/०६ (०) प्रथम भावको मध्य
प्रथम षष्टाव्य + १७/४८/५०

---------------------

६/२२/४४/५६ (२) द्वितीय भाव

प्रथम षष्टाव्य +१७/४८/५०

---------------------

७/१० /३३ /४६ (०) द्वितीय भावको मध्य
प्रथम षष्टाव्य +१७/४८/५०

-------------------------

७ /२८/२२/३६ (३) तृतीय भाव

प्रथम षष्टाव्य + १७/४८/५०

-------------------------

८/१६ /११ /२६ (०) मध्य

प्रथम षष्टाव्य + १७/४८/५०

------------------------

९/०४/००/१६ (४) चतुर्थ भाव

अब चतुर्थ भावमा द्वितीय षष्टाव्य + ६ चोटी जोडेर सप्तम भाव दिन्छ

९ /०४/००/१६ (४) चतुर्थ भाव

द्वितीय षष्टाव्य +१२/११/१०

------------------------

९ / १६ /११/२६ (०) चतुर्थ भावको मध्य

द्वितीय षष्टाव्य + १२/११/१०

------------------------

९/२८ /२२/३६ (५) पञ्चम भाव

द्वितीय षष्टाव्य + १२/११/१०

-----------------------

१०/१०/३३/४६ (०) मध्य

द्वितीय षष्टाव्य + १२/११/१०

--------------------------

१० /२२/४४ /५६ (६) षष्ठ भाव

द्वितीय षष्टाव्य + १२/११/१०

--------------------------

११/ ०४ / ५६ /०६ (०) मध्य

द्वितीय षष्टाव्य +१२/११/१०

------------------------------

११/१७/०७/१६ (७) सप्तम भाव

अब सप्तम भावमा + ६ चोटी जोडेर दशम भाव दिन्छ

११/१७/०७/१६ (७) सप्तम भाव

प्रथम षष्टाव्य + १७/४८/५०

-----------------------

१२ /०४ /५६ /०६ (०) मध्य

प्रथम षष्टाव्य + १७/४८/५०

-------------------------

१२/२२/४४/५६ (८) अस्तम भाव

१२/२२/४४/५६ (८) अस्तम भाव

प्रथम षष्टाव्य + १७/४८/५०

-----------------------

०/१०/३३/४६ (०) मध्य

प्रथम षष्टाव्य + १७/४८/५०

------------------------

०/२८/२२/३६ (९) नवम भाव

प्रथम षष्टाव्य + १७/४८/५०

---------------------------

१/१६/११/२६ (०) मध्य

प्रथम षष्टाव्य + १७/४८/५०

-------------------------

२/०४/०/१६ (१०) दशम भाव

अब दशम भावमा+ ६ द्वितीय षष्टाव्य जोडेर प्रथम भाव दिन्छ ।

२/०४/०/१६ (१०) दशम भाव

द्वितीय षष्टाव्य + १२/११/१०

----------------------

२/१६/११/२६ (०) मध्य

द्वितीय षष्टाव्य + १२/११/१०

------------------------

२/२८/२२/३६ (११) एकादश भाव

द्वितीय षष्टाव्य + १२/११/१०

-------------------------

३/१०/३३/४६ (०) मध्य

द्वितीय षष्टाव्य + १२/११/१०

-------------------------

३/२२/४४/५६ (१२) द्वादश भाव

३/२२/४४/५६ (१२) द्वादश भाव

द्वितीय षष्टाव + १२/११/१०

------------------------

५/०५/०/०६ (०) मध्य

द्वितीय षष्टाव्य + १२/११/१०

--------------------

५/१७/०/१६ (१) प्रथम भाव

अब कुन ग्रह कुन भावमा पर्छ भनेर छुटाउन को लागी ग्रह स्पष्ट र द्वादश भाव स्पष्ट हुनुपर्दछ | र ग्रहको राशि अंश हेरी कुन भावमा कुन ग्रह पर्छ छुटाउन सजिलो हुन्छ |

## भाव चलित कुण्डली भर्ने तरिका

यसमा पनि लग्नको आधारमा राशि निर्धारण गरिन्छ, तर कुन ग्रहको राशि कुन भावमा पर्छ भनेर छुटाइन्छ | हामीलाई थाहा छ १ राशिको ३० अंश भाव चलित कुण्डली १५ अंश १५ गरी दुई भागमा विभाजन गरिन्छ | भाव कुण्डली भोर्नको लागी ग्रह स्पष्ट हेरी द्वादश भाव पनि हेर्ने र राशि अंश हेरी कुन भावमा पर्छ हेर्ने र जुन भावमा जुन ग्रह पर्छ त्यही ग्रह लेख्ने यही अनुसार छुटाउन सकिन्छ |

५/१७/०/१६ (१) प्रथम भाव
६/०४/५६/०६ (०) प्रथम भावको मध्य
६/२२/४४/५६ (२) द्वितीय भाव
७/१०/३३/४६ (०) द्वितीय भावको मध्य
७/२८/२२/३६ (३) तृतीय भाव
८/१६/११/२६ (०) मध्य
९/०४/००/१६ (४) चतुर्थ भाव
९/१६/११/२६ (०) चतुर्थ भावको मध्य
९/२८/२२/३६ (५) पञ्चम भाव
१०/१०/३३/४६ (०) मध्य
१०/२२/४४/५६ (६) षष्ठ भाव
११/०४/५६/०६ (०) मध्य
११/१७/०७/१६ (७) सप्तम भाव
१२/०४/५६/०६ (०) मध्य
१२/२२/४४/५६ (८) अष्टम भाव
०/१०/३३/४६ (०) मध्य
०/२८/२२/३६ (९) नवम भाव
१/१६/११/२६ (०) मध्य
२/०४/०/१६ (१०) दशम भाव
२/१६/११/२६ (०) मध्य
२/२८/२२/३६ (११) एकादश भाव
३/१०/३३/४६ (०) मध्य
३/२२/४४/५६ (१२) द्वादश भाव
४/०५/०/०६ (०) मध्य

लग्न स्पष्ट ५/१७/७/१६ हुन्छ
चन्द्र स्पष्ट २/२७/१६/५२
सुर्य स्पष्ट ११/२३/१९/५८
मंगल स्पष्ट ८/२४/३०/५३
बुध स्पष्ट ०/८/३१/४
गुरु स्पष्ट ३/१४/५२/२६
शुक्र स्पष्ट १०/१९/४१/०
शनि स्पष्ट १/७/५५/२
राहु स्पष्ट १/७/५५/२
केतु स्पष्ट ७/७/५५/२

# भाव चलित कुण्डली




**नोट:- भाव चलित कुण्डली भोर्दा हामीले राशि अनुसारको भावलाई हेरिन्छ | जस्तै चन्द्र २ राशिमा छ भने यसको भावलाई हेर्नुपर्छ**

द्वादशांश कुण्डली भनेको १ राशि ३० अंश हुन्छ र ३० अंशलाई १२ ले भाग गर्ने प्रक्रियालाई नै द्वादशांश कुण्डली भनिन्छ ।

उदाहरण १ राशिमा ३ अंश हुन्छ ।

१२)३०(२/३० अतः २/३० आयो

-२४

--------

६

×६०

--------

३६०

-३६०

---------

×××

अब प्रथम द्वादशांश २/३० भयो २/३०+२/३० = ५/०० द्वितीय भयो ।५/०० +२/३० = ७/३० तृतीय भयो । ७/३०+ २/३० = १०/०० चतुर्थ भयो । १०/००+ २/३० = १२/३० पञ्चम हुन्छ ।१२/३०+२/३० = १५/०० षष्ठ भयो । १५/००+२/३० = १७/३० सप्तम हुन्छ । १७/३० + २/३० = २०/०० अस्तम भयो ।२०/००+२/३० = २२/३० नवम हुन्छ । २२/३०+२/३० =२५/०० दशम हुन्छ ।२५/००+२/३० = २८/३० एकादश हुन्छ ।२८/३०+२/३०= ३०/०० द्वादशौ हुन्छ ।

उदाहरण एक राशिमा द्वादशांश हुन्छ ।एक राशिको द्वादशांश २/३० हुन्छ ।मेष राशीको गणना गर्दा आफ्नौ राशिबाट सुरु हुन्छ ।अर्थात मेष प्रथम द्वादशंम मेष देखि सुरू हुन्छ ।त्यसैगरी वृष राशिका वृष बाट त्यसैगरी मीन राशि मीन देखि द्वादशांश सुरु हुन्छ ।

द्वादशांश कुण्डली भर्ने तरिका लग्न राशि र अंश गएर द्वादशांश कुण्डली तालिका गएर खोज्ने र प्राप्त गरेको राशि लेख्ने सुरु राशि त्यही हुन्छ ।र ग्रहहरूको राशि अंश कला द्वादशांश कुण्डली तालिका गएर खोज्ने र जुन राशिमा पर्छ त्यही यसको राशि हुन्छ यसरी पनि भोर्न सकिन्छ ।

द्वादशांश वोधक तालिका

| अंश | कला | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| २ | ३० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ |
| ५ | ० | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ |
| ७ | ३० | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ |
| १० | ० | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ |
| १२ | ३० | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ |
| १५ | ० | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ |
| १७ | ३० | ७ | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ |
| २० | ० | ८ | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ |
| २२ | ३० | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ |
| २५ | ० | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ |
| २७ | ३० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० |
| ३० | ० | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ |

## द्वादशांश कुण्डली



## होरा कुण्डली

होरा कुण्डली

सम र बिषम राशिको आधारमा निर्धारण गरेको कुण्डली लाई होरा कुण्डली भनिन्छ । एक राशिमा ३० अंश हुन्छ भने त्यसको १५ अंश सुर्य हिरा र वाकी १५ अंश चन्द्रको होरा हुन्छन । सुर्य ५ अंक हुन्छ भने चन्द्रको ४ अंक हुन्छ ।

सम राशि भनेको जोड राशिलाई सम राशि भनिन्छ ।

जस्तै:- वृष, कर्कट, कन्या, वृश्चिक, मकर,मीन

विषम राशि भनेको विजोड राशिलाई विषम राशि भनिन्छ ।

जस्तै:-मेष, मिथुन, सिहं, तुला, धनु, कुम्भ

शुत्रहरु

१) सम राशिको सुरुको १५ अंश चन्द्रको होरा हुन्छ ।

२) सम राशिको अन्त्यको १५ अंश सूर्यको होरा हुन्छ।

३)विषम राशिको सुरुको १५ अंश सूर्यको होरा हुन्छ ।

४) विषम राशिको अन्त्यको १५ अंश चन्द्रको होरा हुन्छ ।

होरा कुण्डली भिर्ने तरिका

सम र विषम राशिको आधारमा भरिन्छ जस्तै लग्न कन्या राशि छ भने सम राशि पर्छ र यसको १७ अंश छ भने यो सुर्यको होरा पर्छ भने माथि ५ तल ४ अंक हुन्छ

र अरु ग्रह सम र विषम राशिको अंशको आधार निर्धारण गरिन्छ ।

होरा तालिका

| अंश | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| १५ | ५ | ४ | ५ | ४ | ५ | ४ | ५ | ४ | ५ | ४ | ५ | ४ |
| ३० | ४ | ५ | ४ | ५ | ४ | ५ | ४ | ५ | ४ | ५ | ४ | ५ |

# होरा कुण्डली



द्रेष्काण कुण्डली

एक राशिको अंशलाई ३ ले भाग गरी ३ ठाउँमा विभाजन गर्ने प्रक्रियालाई नै द्रेष्काण कुण्डली हो

उदाहरण

३)३०(१०

-३०

---------

×××

अब ०-१० अंश प्रथम द्रेष्काण हुन्छ

१०-१९ अंश पञ्चम द्रेष्काण हुन्छ

२०-२९ अंश नवम द्रेष्काण हुन्छ

कुण्डली भर्ने तरिका

अर्थात १ अंश देखि १० अंश स्वो राशि हुन्छ

१० अंश देखि १९ अंश सम्म आफ्नो राशि बाट पञ्चम राशिमा जान्छ ।

२० अंश देखि २९ अंश सम्म आफ्नो राशि बाट नवम राशि जान्छ

द्रेष्काण ज्ञान तालिका

| अंश | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| १० | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ |
| २० | ५ | ६ | ७ | ८ | ९ | १० | ११ | १२ | १२ | १ | २ | २ |
| ३० | ९ | १० | ११ | १२ | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ |

## द्रेष्काण कुण्डली




### त्रिशांश कुण्डली

त्रिशांश कुण्डली सम र विषम राशिहरूको स्वामीहरुको आधारमा कुण्डली निर्माण गरिन्छ | त्रिशांश कुण्डलीमा एक राशि ३० अंशको हुन्छ त्रिशांश कुण्डलीमा ५ प्रकार विभाजन गर्ने सकिन्छ |

सम राशिहरू:- वृष कर्कट कन्या वृश्चिक मकर मीन

विषम राशिहरू:- मेष मिथुन सिहं तुला धनु कुम्भ।

सम राशिको ०-५ अंश तक शुक्रको स्वामी हुन्छ (०२)

६-१० अंश तक बुधको स्वामी हुन्छ (६)

११-१८ अंश तक वृहस्पति स्वामी हुन्छ (१२)

१९-२५ अंश तक शनि स्वामी हुन्छ (१०)

२६-३० अंश तक मंगल स्वामी हुन्छ (८)

विषम राशिको ०-५ अंश तक मंगल  स्वामी हुन्छ (१)

६-१० अंश तक शनि स्वामी हुन्छ (११)

११-१८ अंश तक वृहस्पति स्वामी हुन्छ (९)

१९-२५ अंश तक  बुध स्वामी हुन्छ (३)

२६-३० अंश तक शुक्र स्वामी हुन्छ (७)

कुण्डली भोर्ने तरिका:- सुरुमा लग्नको राशि सम हो कि बिषम राशिको हो छुटाउने र अंश पनि हेर्ने र सम राशि भए सम राशिको अंश हेर्ने विषम राशि भए विषम राशिको स्वामी हेर्ने र स्वामी छुटाउने र सरु त्येही राशिबाट हुन्छ अरु ग्रह पनि यहि आधारमा छुटाउन सकिन्छ ।

## त्रिशांश ज्ञान तालिका

| अंश | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ०/५ | १ | २ | १ | २ | १ | २ | १ | २ | १ | २ | १ | २ |
| ६/१० | ११ | ६ | ११ | ६ | ११ | ६ | ११ | ६ | ११ | ६ | ११ | ६ |
| ११/१८ | ९ | १२ | ९ | १२ | ९ | १२ | ९ | १२ | ९ | १२ | ९ | १२ |
| १९/२५ | ३ | १० | ३ | १० | ३ | १० | ३ | १० | ३ | १० | ३ | १० |
| २६/३० | ७ | ८ | ७ | ८ | ७ | ८ | ७ | ८ | ७ | ८ | ७ | ८ |

कुण्डली भोर्ने तरिका:- सुरुमा लग्नको राशि सम हो कि बिषम राशिको हो छुटाउने र अंश पनि हेर्ने र सम राशि भए सम राशिको अंश हेर्ने विषम राशि भए विषम राशिको स्वामी हेर्ने र स्वामी छुटाउने र सरु त्येही राशिबाट हुन्छ अरु ग्रह पनि यहि आधारमा छुटाउन सकिन्छ




## सप्तमांश कुण्डली

सप्तमांश कुण्डली भनेको राशिको सातौ भाग सप्तमांश कुण्डली भनिन्छ |जस्तै एक राशिमा ३० अंश हुन्छ जसलाई ७ ले भाग गरेर निकालिन्छ जसलाई सप्तमांश कुण्डली भनिन्छ |

उदाहरण ३०÷७,= ४/१७/८

अतः ४अंश १७ कला ८ विकला प्रथम भाग हुन्छ

८ अंश ३४ कला १७ विकला द्वितीय भाग हुन्छ

१२ अंश ५१ कला २५ विकला तृतीय भाग हुन्छ

१७ अंश ०८ कला ३४विकला चतुर्थ भाग हुन्छ

२१ अंश २५ कला ४२ विकला पञ्चम भाग हुन्छ

२५ अंश ४२/कला ५१ विकला षष्ठ भाग हुन्छ

३० अंश ०० कला ०० विकला सप्तम भाग हुन्छ

सप्तमांश ज्ञान तालिका

| अंश | कला | | मेष | वृष | मिथुन | कर्कट | सिंह | कन्या | तुला | वृश्चिक | धनु | मकर | कुम्भ | मीन |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ४ | १७ | ८ | १ | ८ | ३ | १० | ५ | १२ | ७ | २ | ९ | ४ | ११ | ६ |
| ८ | ३४ | १७ | २ | ९ | ४ | ११ | ६ | १ | ८ | ३ | १० | ५ | १२ | ७ |
| १२ | ५१ | २५ | ३ | १० | ५ | १२ | ७ | २ | ९ | ४ | ११ | ६ | १ | ८ |
| १७ | ८ | ३४ | ४ | ११ | ६ | १ | ८ | ३ | १० | ५ | १२ | ७ | २ | ९ |
| २१ | २५ | ४२ | ५ | १२ | ७ | २ | ९ | ४ | ११ | ६ | १ | ८ | ३ | १० |
| २५ | ४२ | ५१ | ६ | १ | ८ | ३ | १० | ५ | १२ | ७ | २ | ९ | ४ | ११ |
| ३० | ० | ० | ७ | २ | ९ | ४ | ११ | ६ | १ | ८ | ३ | १० | ५ | १२ |

कुण्डली भोर्ने तरिका :- सम र विषम राशिको आधारमा भरिन्छ । जस्तै सम राशि छ भने आफू भन्दा ७ राशि बाट गणना गरिन्छ ।

## सप्तमांश कुण्डली



## नेत्रेनं जन्मनक्षेत्रं नन्दभागाविशेषितम् ।

आ-च-भौ-रा-वृ-श-बु-के-भौ-रा-वृ-श-बु-के-वृ-श-बु-के-श-बु-के-के- शूना स्यः क्रमतो दशा ।

नेपाली अर्थ :- जन्म नक्षेत्र संख्या बाट २ घटाई ९ ले भाग गर्ने ।शेष अनुसार ग्रहको आद्यदशा हुन्छ ।जस्तै १ शेष रहे सूर्य २ शेष रहे चन्द्र  ३ शेषमा मंगल ४ शेष रहे राहु ५ शेष रहे वृहस्पति ६ शेषमा शनि ७ शेष बुध ८ केतु ० शेष रहे शुक्रको पहिलो दशा हुन्छ  ।यसपछि क्रमशः अर्को ग्रह र वर्ष राख्नुपर्छ ।यसपछि आद्यको (पहिलो) दशाको भुक्त कटाई भोग्य दशावर्षदिका क्रमशः जोडदै जानुपर्दछ ।जुन वर्ष जुन ग्रह पर्छ सोही दशाको अन्तर चल्छ ।

### विंशोत्तरीदशावर्षचक्रम्

| शेषम् | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ० |
|---|---|---|---|---|---|---|---|---|---|
| ग्रहाः | सूर्य | चन्द्र | भौम | राहु | गुरु | शनि | बुध | केतु | शुक्र |
| दशावर्षाणि | ६ | १० | ७ | १८ | १६ | १९ | १७ | ७ | २० |

विंशोत्तरीसाधनमसूत्र = $\frac{\text{जन्म नक्षेत्र संख्या -२}}{९}$ शेषनुसारेण आ-च-भौ-रा इत्यादय

उदाहरण:- २०५९ चैत्र २४ सोमवार सायं ६:०० अर्घाखाँची जिल्ला

इस्टकाल= ३०/३  भयात = १९/०७ भभोग= ६४/३४ जन्म नक्षेत्र संख्या मृगशीरा (५)

अब जन्म नक्षेत्र संख्या  २ घटाउने

=५-२ = ३

अब जन्म नक्षेत्र संख्या घटाएर आएको लब्धिमा ९ ले भाग गर्ने ।

=३÷९

यहाँ ३ लाई ९ ले भाग नखाएकाले  ३ शेष हुन्छ यो भौमको आद्यदशा ।अस्य वर्ष प्रमाण ७  इति ।

| शेषम् | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ० |
|---|---|---|---|---|---|---|---|---|---|
| ग्रहाः | सूर्य | चन्द्र | भौम | राहु | गुरु | शनि | बुध | केतु | शुक्र |
| दशावर्षाणि | ६ | १० | ७ | १८ | १६ | १९ | १७ | ७ | २० |

ततः अत्र भौमस्य कति भुक्त कति च भोग्यमस्तीति ज्ञानाय भुक्तभोग्यवर्षादि यथाऽऽ नीयते |

(याहाँ मंगलको आद्य पहिलो) दशा आयो | भौ, रा, वृ, श, आदि माथि तालिकामा बनायौ | अब पहिलो दशा मंगलको बालक जन्मेको समय कति भोग गरिसकेको थियो | र कति भोग गर्न बाँकी छ सो निकाले पोछि मात्र उत्त चक्रमा भुक्त घटाएर वर्षादि मान निर्धारण गर्न सकिन्छ |

अथ भुक्तभोग्यसाधनम्

$$\text{भुक्तदशावर्षप्रमाणम्} = \frac{\text{पलात्मक भयात} \times \text{आदयदशावर्षमानम्}}{\text{पलात्मक भभोग}}$$

भोग्यदशावर्षप्रमाणम् = आद्यदशावर्षप्रमाणम् - भुक्तदशावर्षप्रमाणम्

उदाहरण:- २०५९ चैत्र २४ सोमवार सायं ६:०० अर्घाखाँची जिल्ला

इस्टकाल= ३०/३ भयात = १९/०७ भभोग= ६४/३४ जन्म नक्षेत्र संख्या मृगशीरा (५)

भौमदशावर्ष = ७

पलात्मक भयात = १९×६० + ७ = ११४७

फलात्मक भभोग= ६४×६०+ ३४ = ३८७४

अब पलात्मक भयात लाई आद्य दशा वर्षले गुणान गर्ने र पलात्मक भभोग ले भाग गर्नुपर्छ |

भुक्तदशावर्षप्रमाणम् = ११४७ × ७ ÷ ३८७४

= ८०२९÷३८७४

३८७४)८०२९( २ वर्ष ३ महिना १० दिन २७ घटी

-६९४८

---------------

१०८१

अब महिना मा निकाल्दा ×१२

----------

१२९७२

- ११६२२

-----------------

१३५०

अब दिनमा निकाल्दा × ३०

-------------------

४०५००

-३८७४०

--------------

१७६०

×६०

----------------

१०५६००

( यहाँ १२ महिनामा १ वर्ष ३० दिन १ महिना ६० घटी को १ दिन सोही निकाल्नको लागी ६० ले गुणा गरिएको छ | यसपछि पलादि मान निकाल्न ६० गुणा एवम भाग प्रक्रिया गर्नुपर्छ) |

अत्र भुक्त वर्षादि = २ वर्ष ३ महिना १० दिन २७ घटी

ततः भोग्यवर्षाप्रमाणम् = आद्यवर्षप्रमाणम् - भुक्तवर्षप्रमाणम्

= ७/००/००/००   आद्यदशावर्ष

- २/०३/१०/२७       भुक्तदशावर्ष

-------------------------

४/८/१९/३३ भोग्यदशा बर्ष

भुक्तभोग्य निहित विशोत्तरी भोर्ने तरिका:- ( हामीले सुरुमा नक्षेत्र संख्यालाई २ ले घटाएर ९ ले भाग गरेर जति शेष निकालिएका थियो त्यही हुन्छ सुरुको दशा वर्ष त्यही हुन्छ सुरुमा त्यही ग्रह लेख्ने अरु ग्रहहरू पनि क्रमशः लेख्ने र दशा वर्ष पनि लेख्ने अब हामीले जुन ग्रह भुक्त र भोग्य दशा वर्ष निकालिएका थियो त्यही ग्रह दशा वर्ष माझमा एउटा लाइन तान्ने र सुरु लाईन भुक्त दशा वर्ष लेख्ने र त्यहाँ भोग्य दशा वर्ष लेख्ने र अरु ग्रहको दशा वर्ष मा भोग्य दशा वर्ष जोड्नुपर्छ महिना र दिन चाही भोग्य वर्षको जस्ताको त्यस्तै लेख्नुपर्छ ।

| ग्रहा | मंगल | | राहु | गुरु | शनि | बुध | केतु | शुक्र | सुर्य | चन्द्र |
|---|---|---|---|---|---|---|---|---|---|---|
| दशावर्ष | ७ | | १८ | १६ | १९ | १७ | ७ | २० | ६ | १० |
| | भुक्त | भोग्य | | | | | | | | |
| वर्ष | २ | ४ | २२ | ३८ | ५७ | ७४ | ८१ | १०१ | १०७ | ११७ |
| महिना | ३ | ८ | ८ | ८ | ८ | ८ | ८ | ८ | ८ | ८ |
| दिन | १० | १९ | १९ | १९ | १९ | १९ | १९ | १९ | १९ | १९ |
| घटी | २७ | ३३ | ३३ | ३३ | ३३ | ३३ | ३३ | ३३ | ३३ | ३३ |

## त्रिभागीदशावर्ष  भुक्त भोग्य साधन विधि

नेत्रेनं जन्मनक्षेत्रं नन्दभागाविशेषितम् ।

आ-च-भौ-रा-वृ-श-बु-के-भौ-रा-वृ-श-बु-के-वृ-श-बु-के-श-बु-के-के- शूना स्यः क्रमतो दशा ।

नेपाली अर्थ :- जन्म नक्षेत्र संख्या बाट २ घटाई ९ ले भाग गर्ने । शेष अनुसार ग्रहको आद्यदशा हुन्छ । जस्तै १ शेष रहे सूर्य २ शेष रहे चन्द्र  ३ शेषमा मंगल ४ शेष रहे राहु ५ शेष रहे वृहस्पति ६ शेषमा शनि ७ शेष बुध ८ केतु ० शेष रहे शुक्रको पहिलो दशा हुन्छ  । यसपछि क्रमशः अर्को ग्रह र वर्ष राख्नुपर्छ । यसपछि आद्यको (पहिलो) दशाको भुक्त कटाई भोग्य दशावर्षदिका क्रमशः जोडदै जानुपर्दछ । जुन वर्ष जुन ग्रह पर्छ सोही दशाको अन्तर चल्छ । त्रिभागी विंशोत्तरीलाई नै ३ भाग लगाएर र १ भाग कटाएर राखिएको दशा वर्षको मान हो । जहाँ परमायु ८० वर्ष मानिएको छ ।

त्रिभागीदशावर्षचक्रम्

| शेषम् | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ | ० |
|---|---|---|---|---|---|---|---|---|---|
| ग्रहाः | सूर्य | चन्द्र | भौम | राहु | गुरु | शनि | बुध | केतु | शुक्र |
| दशावर्षाणि | ४ | ६ | ४ | १२ | १० | १२ | ११ | ४ | १३ |
| महिना | ० | ८ | ८ | ० | ८ | ८ | ४ | ८ | ४ |

ततः अत्र भौमस्य कति भुक्त कति च भोग्यमस्तीति ज्ञानाय भुक्तभोग्यवर्षादि यथाऽऽ नीयते ।

(याहाँ मंगलको आद्य पहिलो) दशा आयो ।भौ, रा, वृ, श, आदि माथि तालिकामा बनायौ ।अब पहिलो दशा मंगलको बालक जन्मेको समय कति भोग गरिसकेको थियो ।र कति भोग गर्न बाँकी छ सो निकाले पोछि मात्र उत्त चक्रमा भुक्त घटाएर वर्षादि मान निर्धारण गर्न सकिन्छ ।

अथ भुक्तभोग्यसाधनम्

$$\text{भुक्तदशावर्षप्रमाणम्} = \frac{\text{पलात्मक भयात} \times \text{आदयदशावर्षमानम्}}{\text{पलात्मक भभोग}}$$

भोग्यदशावर्षप्रमाणम् = आद्यदशावर्षप्रमाणम् - भुक्तदशावर्षप्रमाणम्

उदाहरण:- २०५९ चैत्र २४ सोमवार सायं ६:०० अर्घाखाँची जिल्ला

इस्टकाल= ३०/३ भयात = १९/०७ भभोग= ६४/३४ जन्म नक्षेत्र संख्या मृगशीरा (५)

भौमदशावर्ष = ७

पलात्मक भयात = १९×६० + ७ = ११४७

फलात्मक भभोग= ६४×६०+ ३४ = ३८७४

अब पलात्मक भयात लाई आद्य दशा वर्षले गुणान गर्ने र पलात्मक भभोग ले भाग गर्नुपर्छ ।

भुक्तदशावर्षप्रमाणम् = ११४७ × ४/८ ÷ ४५८८/९१७६

= ४५८८/९१७६

३८७४)४५८८/९१७६(१/५/१५/१७

-३८७४ +१२१६८

------------ ---------

१०१४ २१३४४

× १२ -१९३७०

----------- ----------

१२१६८ १९७४

×३०

-----------

५९२२०

-५८११०

----------------

१११०

× ६०

-------------

६६६००

- ६५८५८

-----------------

७४२

(यहाँ १२ महिनामा १ वर्ष ३० दिन १ महिना ६० घटी को १ दिन सोही निकाल्नको लागी ६० ले गुणा गरिएको छ । यसपछि पलादि मान निकाल्न ६० गुणा एवम भाग प्रक्रिया गर्नुपर्छ) ।

अत्र भुक्त वर्षादि = १ वर्ष ५ महिना १५ दिन १७ घटी

तत: भोग्यवर्षाप्रमाणम् = आद्यवर्षप्रमाणम् - भुक्तवर्षप्रमाणम्

ततः भोग्यवर्षाप्रमाणम् = आद्यवर्षप्रमाणम् - भुक्तवर्षप्रमाणम्

= ४/८/००/००/ आद्यदशावर्ष

= १/५/१५/१७ भुक्तदशावर्ष

------------------------

३/२/१४/४३भोग्य दशा वर्ष

| ग्रहा | मंगल | | राहु | गुरु | शनि | बुध | केतु | शुक्र | सुर्य | चन्द्र |
|---|---|---|---|---|---|---|---|---|---|---|
| दशावर्ष | ४/८ | | १२/० | १०/८ | १२/८ | ११/४ | ४/८ | १३/४ | ४/० | ६/८ |
| वर्ष | १ | ३ | १५ | २५ | ३८ | ४९ | ५४ | ६७ | ७१ | ७८ |
| महिना | ५ | २ | २ | १० | ६ | १० | ६ | १० | १० | ६ |
| दिन | १५ | १४ | १४ | १४ | १४ | १४ | १४ | १४ | १४ | १४ |
| घटी | १७ | ४३ | ४३ | ४३ | ४३ | ४३ | ४३ | ४३ | ४३ | ४३ |

## योगीनी भुक्त भोग्य साधनम विधि

त्रियुक्तं जन्मक्षेत्रं गजाभागावशेषितम्

मं पि धा भ्रा भ उ सि सं

नेपाली अर्थ :- जन्म नक्षेत्र संख्या ३ जोडी ८ ले भागगर्नु | शेषअनुसार ग्रहको आद्यदशा हुन्छ| जस्तै १ शेष रहे मंगला २ शेष रहे पिङ्गला ३ शेषमा धान्य ४ शेष रहे भ्रामरी ५ शेषमा भद्रिका ६ शेष रहे उल्का ७ शेषमा सिद्धा ० शेष रहे संकटा पहिलो दशा वर्ष हुन्छ | यसपछि क्रमशः अर्को ग्रह र वर्ष पनि राख्नुपर्छ | यसपछि आद्य (पहिलो) दशाको भुक्त कटाई भोग्य वर्षादका क्रमश: जोडदै जानुपर्दछ | जुन वर्ष जुन ग्रह पर्छ सोही ग्रहको दशा चल्छ | यसरी गणना गर्दा अश्विनी नक्षत्रको निकाल्दा भने नक्षेत्र संख्या २७ जोडेर बाँकी हिसाब गर्नुपर्छ | अर्थात केतुको आद्य दशा हुन्छ |

### योगीनी दशावर्षचक्रम्

| शेषम् | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ० |
|---|---|---|---|---|---|---|---|---|
| | मंगला | पिंगला | धान्या | भ्रामरी | भद्रिका | उल्का | सिद्धा | संकटा |
| दशावर्ष | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ |

$$\text{भुक्तदशावर्षप्रमाणम्} = \frac{\text{पलात्मक भयात} \times \text{आदयदशावर्षमानम्}}{\text{पलात्मक भभोग}}$$

उदाहरण:- २०५९ चैत्र २४ सोमवार सायं ६:०० अर्घाखाँची जिल्ला

इस्टकाल= ३०/३  भयात = १९/०७ भभोग= ६४/३४ जन्म नक्षेत्र संख्या मृगशीरा (५)

योगिनीदशासाधनसुत्रम्  =  ५+३  = ८

८)८(१

-८

-----

××

अतः ० शेष रहेको हुनाले संकटा आद्यदशा |दशावर्ष  प्रमाणम् ८ इति |

तत: योगिदशाचक्रम

| शेषम् | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ० |
|---|---|---|---|---|---|---|---|---|
| | मंगला | पिंगला | धान्या | भ्रामरी | भद्रिका | उल्का | सिद्धा | संकटा |
| दशावर्ष | १ | २ | ३ | ४ | ५ | ६ | ७ | ८ |

तत: अत्र संकटा कति भुक्त कति च भोग्यमस्तीति ज्ञानाय भुक्तभोग्यवर्षादि  यथाऽऽ नीयते |

(यहाँ संकटाको आद्य (पहिलो) दशा आयो र संकटा मंगला पिंगला धान्य इत्यादि हामिले माथि तालिका बनायौं |अब पहिलो दशा संकटाले बालक जन्मेको समय  कति भोग गरिसकेको थियो र कति भोग गर्न बाँकी छ सो निकाले मात्र उत्त चक्रमा भुक्तमा घटाएर वर्षादि मान निर्धारण गर्न सकिन्छ |

उदाहरण:- २०५९ चैत्र २४ सोमवार सायं ६:०० अर्घाखाँची जिल्ला

इस्टकाल= ३०/३  भयात = १९/०७ भभोग= ६४/३४ जन्म नक्षेत्र संख्या मृगशीरा (५)

पलात्मक भयात = १९×६० + ७ = ११४७

फलात्मक भभोग= ६४×६०+ ३४ =३८७४

अब पलात्मक भयात लाई आद्य दशा वर्षले गुणान गर्ने र पलात्मक भभोग ले भाग गर्नुपर्छ |

इतिसुत्रनुसारेण

भुक्तदशावर्षप्रमाणम् = पलात्मक भयात ×आद्यदशावर्षमानम्

--------------------------------------------------

पलात्मक भभोग

भोग्यदशावर्षप्रमाणम्  = आद्यदशावर्षप्रमाणम् - भुक्तदशावर्षप्रमाणम्

= ११४७ × ८ = ९१७६

३८७४)९१७६( २ वर्ष ४महिना १२ दिन ४२ घटी

- ७७४८

-----------------

१४२८

× १२

-----------

१७१३६

-१५४९६

-------------

१६४०

×३०

-------------

४९२००

-४६४८८

---------------

२७१२

×६०

-------------

१६२७२०

-१६२७०८

-----------------

१२

(यहाँ १२ महिनामा १ वर्ष ३० दिन १ महिना ६० घटी को १ दिन सोही निकाल्नको लागी ६० ले गुणा गरिएको छ | यसपछि पलादि मान निकाल्न ६० गुणा एवम भाग प्रक्रिया गर्नुपर्छ) |

अत्र भुक्तादिवर्ष २/४/१२/४२ ( २ वर्ष ४ महिना १२ दिन ४२ घटी )

भोग्यदशावर्षप्रमाणम् = आद्यदशावर्षप्रमाणम् - भुक्तदशावर्षप्रमाणम्

= ८/००/००/०० आद्यवर्षप्रमाणम्

-२/०४/१२/४२ भुक्तदशावर्षप्रमाणम्

------------------------

५ /०७ /१७/१८ भोग्यदशावर्ष प्ररमाणम

| ग्रहा | संकटा | | मंगला | पिंगला | धान्या | भ्रामरी | भद्रिका | उल्का | सिद्धा |
|---|---|---|---|---|---|---|---|---|---|
| दशावर्ष | ८ | | १ | २ | ३ | ४ | ५ | ६ | ७ |
| वर्ष | २ | ५ | ६ | ८ | ११ | १५ | २० | २६ | ३३ |
| महिना | ४ | ७ | ७ | ७ | ७ | ७ | ७ | ७ | ७ |
| दिन | १२ | १७ | १७ | १७ | १७ | १७ | १७ | १७ | १७ |
| घटी | ४२ | १८ | १८ | १८ | १८ | १८ | १८ | १८ | १८ |

## राशिअनुसार घातक चक्र

| **राशि** | **मेष** | **वृष** | **मिथुन** | **कर्कट** | **सिंह** | **कन्या** | **तुला** | **वृश्चिक** | **धनु** | **मकर** | **कुम्भ** | **मीन** |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| **व.घा** | मे. | कं | कु | सिं | म | मि | ध | वृ | मी | सिं | ध | कु |
| **ति.घा** | न | पू | भ | भ | ज | पू | रि | नं | ज | रि | ज | पू |
| **वा.घा** | र | श | चं | बु | श | श | बृ | शु | शु | मं | बृ | शु |
| **न.घा** | म | ह | स्वा | अनु | मु | श्र | श | रे | भ | रो | आ | श्ले. |
| **यो.घा** | वि | शु | प | व्यो | धृ | शू | शू | व्य | व | वै | गं | व |
| **क.घा** | व | श | च | ना | व | कौ | तै | ग | तै | श | कि | च |
| **ल.घा** | १ | २ | ४ | ७ | १० | १२ | ६ | ८ | ९ | ११ | ३ | ५ |

| राशि | मास | तिथि | बार | नक्षत्र | पुरुष घात चन्द | स्त्री घात चन्द |
|---|---|---|---|---|---|---|
| मेष | कार्तिक | १-६-११ | आईतबार | मघा | मेष | मेष |
| वृष | मार्गशीर्ष | ५-१०-१५ | शनिबार | हस्त | सिंह | धनु |
| मिथुन | आषाढ | २-७-१२ | सोमबार | स्वाति | धनु | धनु |
| कर्कट | पौष | २-७-१२ | बुधबार | अनुराधा | वृष | मीन |
| सिंह | ज्येष्ठ | ३-८-१३ | शनिबार | मुल | कन्या | वृश्चिक |
| कन्या | भाद्रपद | ५-१०-१५ | शनिबार | श्रवण | मकर | वृश्चिक |
| तुला | माघ | ४-९-१४ | विहिबार | शतभिषा | मिथुन | मीन |
| वृश्चिक | आश्विन | १-६-११ | शुक्रबार | रेवती | तुला | धनु |
| धनु | श्रवण | ३-८-१३ | शुक्रबार | भरणी | कर्कट | कन्या |
| मकर | वैशाख | ४-९-१४ | मंगलबार | रोहिणी | वृश्चिक | वृश्चिक |
| कुम्भ | चैत्र | ३-८-१३ | विहिबार | आर्द्रा | कुम्भ | मिथुन |
| मीन | फाल्गुन | ५-१०-१५ | शुक्रबार | आश्लेषा | मीन | कुम्भ |

## वारबेला:-

### बारबेला निकाल्ने विधि

**दिनमान लाई ८ ले भाग गर्नुपर्छ आएको लब्धिमा सुर्यदय जोडदा आएको लब्धि नै बारबेला हो |**

**उदाहरण**

**२०८१ वैशाख ११ गते मंगलवार दिनमान ३२ घडी २८ पला छ |**

**३२/३० ÷ ८ = ४/३.३०**

**= ४/४ अर्घाधिके अनुसार**

**अव ४/४ लाई २.५ ले भाग गर्दा**

**४/४ ÷ २.५ = १/३७/३६**

**अब सुर्यदयले  जोडने**

**५:३३:००**
**+१:३७:३६**
**---------------**
**७:१०:३६  यो मंगलवारको  पहिला वार वेला रोग छ |**

**×२ गरेर दोस्रो चरणकबेला निकालिन्छ | त्यसैगरी ७ चरण हुन्छन्**

अथ प्रतिदिन दिवाकालिन मुहुर्त बोध सारणी:-

| आईत | उद्वेग: | चर: | लाभ: | अंमृत: | काल: | शुभ: | रोग: | उद्वेग |
|---|---|---|---|---|---|---|---|---|
| सोम | अंमृत: | काल: | शुभ: | रोग: | उद्वेग: | चर: | लाभ: | अंमृत |
| मंगल | रोग: | उद्वेग | चर: | लाभ: | अंमृत: | काल: | शुभ: | रोग: |
| बुध | लाभ: | अंमृत: | काल: | शुभ: | रोग: | उद्वेग: | चर: | लाभ: |
| बृहस्प. | शुभ: | रोग: | उद्वेग: | चर: | लाभ: | अंमृत: | काल: | शुभ: |
| शुक्र | चर: | लाभ: | अंमृत: | काल: | शुभ: | रोग: | उद्वेग: | चर: |
| शनि | काल: | शुभ: | रोग: | उद्वेग: | चर: | लाभ: | अंमृत: | काल: |

## अयनांश

वेदाब्धिवेदहीनात्तु शकात्खरसभाजितात् |
अयनांश भवन्यते ब्रह्मापक्षाश्रिता: किल ॥

शालिवाहन शाकेमा चार सय चवालिस घटाएर त्यसमा ६० को-भागदिनु लब्धि हुन्छ | त्यो लब्धि नै ब्रह्मसिध्दान्तको मतले अयनांश हुन्छ |

उदाहरण

सुत्र:- शालिवाहन् शाके - ४४४÷ ६० = अयनांश

= १९४६-४४४÷६०

= २५°२'००" ब्रह्म सिद्धान्त अयनांश

नोट डिग्री मिनेट सेकेन्ड निकाल्न santific calculator को SHIFT थिचेर DMS गर्नुहोस आउन्छ |

१.सुर्य सिद्धान्तय संसोधित अयनांश गर्ने तरिका

सुत्र= शकसबंत-१९८७= अन्तर अथवा बि सं -२०३२= अन्तर

अयनांश=२३.७५५११९४+{२.३३६४४५७÷१४३}×अन्तर]

उदाहरणक बि सं २०८१-२०३२=४९ अन्तर

अयनांश= २३.७५५११९४+{२.३३६४४५७÷१४३}×४९

= २३.७५५११९४+०.८००६००२७४८३

= २४.५५७१९६७४८३

= २४/३३/२१ सुर्य सिद्धान्त अयनांश

## ग्रहलाघवीय अयनांश

**सुत्र {शकसंवत-४४४)÷६०} | वि सं लाई -१३५ घटाऐर शकसंवत निकालिन्छ |**
**उदाहरण बि सं २०८१-१३५ = १९४६ शकसंवत हुन्छ |**
**शकसंवत १९४६-४४४= १५०२**
**६०)१५०२(२५°\२**
**-१५००**

**२**
**×६०**

**१२०**
**- १२०**

**०**
**२५°\२/०" अयनांश**
**३.केतकरी अयनांश निकाल्ने विधि**
**सुत्रहरु निम्मुसार छन**
**१ (इस्टशक-१८००)÷७० = अंशादि लब्धि**
**२.(इस्टशक-१८००)÷५० = कलादि लब्धि**
**३ (अंशादि लब्धि – कलादि लब्धि) + २२° / ८'/३३" = अयनांश**

**उदाहरण**
**बि सं २०८१ – १३५ = १९४६ शकसंवत**
**१९४६ – १८०० = १४६**
**१४६ ÷ ७० = २,०८५७१४२८५७१**
**= २°\५'/ ९"अंशादि लब्धि**

**१९४५ – १८०० = १९४६**
**१४६ ÷ ५० = २.९२**
**= २°/५५/१२ कलादि लब्धि**
**(२°\५'/९") – २°\५५'/११") + २२°\८'/३३"**
**= ०°\५०/३" +२२°/८'/३३"**
**= २२°/५८'/३६" अयनांश**

# सम्वत्सरहरुको नाम

(१) प्रभव (२) विभव (३) शुक्ल (४) प्रमोद (५) प्रजापति (६) अङ्गिरा (७) श्रीमुख (८) भाव (९) युवा (१०) धाता (११) ईश्वर (१२) बहुधान्य (१३) प्रमाथी (१४) विक्रम (१५) वृष (१६) चित्रभान (१७) स्वभानु (१८) तारण (१९) पार्थिव (२०) व्यय (२१) सवजीत (२२) सर्वधारी (२३) विरोधी (२४) विकृति (२५) खर (२६) नन्दन (२७) विजय (२८) जय (२९) मन्थन (३०) दुर्भुव (३१) हेमलम्ब (३२) विलम्बी (३३) विकारी (३४) शार्वरी (३५) प्लव (३६) शुभकृत् (३७) शोभन (३८) क्रोधी (३९) विश्रांवसु (४०) पराभव (४१) प्लवङ्ग (४२) किलक (४३) सौम्य (४४) साधारण (४५) विरोधकृत् (४६) परिधावि (४७) प्रमादि (४८) आनन्द (४९) राक्षस (५०) नल (५१) पिङ्गल (५२) कालयुक्त (५३) सिद्धार्थ

५४ रौद्र ५५ दुर्मती ५६ दुन्दुभी ५७ रुधिरोद् गारी ५८ रक्ताक्ष ५९ क्रोधन ६० क्षय ॥

## सम्वत्सर निकाल्ने विधि

( विं सं +९) ÷ ६० = शेष + = सम्वत्सर हुन्छ

उदाहरण

वि सं २०८१ + ९

= २०९०

६०)२०९०(३४

-२०४०

---------

शेष लब्धि ५०

५० + १

५१ पिङ्गल नाम संवत्सरे

नोट प्रतिवत्सर चौत्रशुक्ल प्रतिपादा बाट आरभ्य हुन्छ |

सजिलो ज्योतिष सङ्ग्रह (२)

गणित खण्ड समाप्त

फलित ज्योतिष प्रारम्भः

चित्रमा देखाईएको कुरालाई राम्ररी दिमागमा बसाउनुहुनेछ ।

चिनामा हुने १२ भाव




कुन घरलाई के भनिन्छ ।




# जातकको राशि र जन्म महिना छुट्याने तरिका

**राशि:** चन्द्रमा जति अंकमा छ त्यो व्यक्तिको त्यही राशि हुन्छ ।

**महिना:** सूर्य जति अंकमा छ त्यो व्यक्तिको त्यही जन्म महिना हुन्छ ।

मांगलिक योग




यहाँ मंगल देखाएको कोठा मध्ये कुनैमा पनि मंगल बसेको भए त्यसलाई मांगलिक योग भनिन्छ ।

# कालसर्पयोग







कालसर्पयोग भनेको राहु र केतु भित्र ७ वटा ग्रह पर्छन भने त्यसलाई कालसर्पयोग भन्छन ।

# शनिको साढे साति

द्वादशे जन्मभे राशौ द्वतीये च शनैश्चरः ।

साद्धानि सप्तवर्षाणि तदा दुःखैर्यतो भवेत् ॥१॥

अर्थः- आफ्नो जन्म राशिबाट १२,१२ स्थानमा शनिश्चर भएमा साढे साति हुन्छ । साढे सातिमा दुःख हुन्छ । एक राशिमा २ वर्षका हिसावले ३ राशिमा ७ वर्ष हुन्छन् ।

# अढैया शनि

पुनश्चः- जुन राशिमा शनि छ । त्यसमा जुन् जुन् राशिबाट गर्न लाग्दा ४-८ पर्दछ त्यो त्यो राशिलाई अढैया शनि भनिन्छ ।

# राशिअनुसारको फलादेश

मेष राशिको मान्छेः- चञ्चल नेत्रवाला, नित्य रोगी, धर्म एवम् धनोपार्जन गर्ने, जङ्घा, कृतघ्न, पापहीन, राजसम्मानित, स्त्रीजनवल्लभ, दाता, पानीसँग डराउने, उग्रकर्म गरे पनि नम्र भइहाल्ने स्वभावको हुनसक्छ ।

वृष राशिको मान्छेः- दाता, भोगी, पवित्र, चतुर, महाबलमान्, बुद्धिमान्, धनी, विलासी, तेजस्वी एवम् सुन्दर मित्रवाला हुनसक्छ ।

मिथुन राशिको मान्छेः- प्रियवक्ता, चञ्चल नेत्र, दयावान्, मैथुनप्रिय, सङ्गीत जान्ने, यशस्वी, धनवान्, गुणवान्, गौरवर्ण, लामो देह, बोलक्कड, मेधावी, निश्चित सङ्कल्पवाला, समर्थ एवम् नीतिवादी हुनसक्छ ।

कर्कट राशिको मान्छेः- कार्यपुट, धनी, शूर, धर्मात्मा, गुरूभक्त, टाउकाको रोगी, महावुद्धिमान्, दुब्लो शरीर, कार्य जान्ने, विदेशवासी, धनवान्, अल्पबलवाला, दुःखी, सुन्दर मित्रवाला, घरमा अनासक्त एवम् कुटिल हुनसक्छ ।

सिंह राशिको मान्छेः- क्षमाशील, कार्यमा तत्पर, मद्य-मांसप्रिय, देश घुम्ने, चिसोदेखी डराउने, सुन्दर मित्रवाला, नम्र, शीध्र रिसाउने, मातापिताको भक्त, व्यसनी एवम् लोकविख्यात हुनसक्छ ।

कन्या राशिको मान्छेः- विलासी, साधुभक्त, सुन्दर, धर्मात्मा, दाता, चतुर, कवि, वृद्धावस्थाको जस्तो शरीर, वेदशास्त्रज्ञ, सर्वप्रिय, नाट्यसङ्गीतमा रत, प्रवासी एवम् स्त्रीको कारण दुःखी हुनसक्छ ।

तुला राशिको मान्छेः- अकारण असमयमा रिसाउने, दुःखी, कोमल वचनवाला, दयालु, चन्चल नेत्रवाला, चल धनवाला, घरमा वीरता देखाउने, व्यपारमा चतुर, देवभक्त, मित्रसँग प्रेम गर्ने, परदेशवासी एवम् बन्धुहरूको प्रिय हुनसक्छ ।

वृश्चिक राशिको मान्छेः- बाल्यावस्थादेखी नै विदेशी, क्रुरहृदय, शूर, पिङ्गलवर्ण नेत्रवाला, परस्त्रीप्रेमी, आफ्नो मान्छेमा निठुर, उद्योगद्वारा धनकमाउने, आमासँग पनि दुष्ट बुद्धि गर्ने, धूर्त एवम् छलकर्ममा निपुण हुनसक्छ ।

धनु राशिको मान्छेः- शूर, सदबुद्धि, सात्विक, लोकप्रिय, शिल्प विद्यामा निपुर्ण, धनवान्, सुन्दर स्त्रीको पति, मानी, सच्चरित्रवान्, मृदु, प्रियभाषी, तेजस्वी एवम् स्थुर शरीरवाला हुनसक्छ ।

मकर राशिको मान्छेः- कुलमा हीन, स्त्रीको वशमा रहने, अकारण विद्वान् सँग विवाद गर्ने, स्त्रीहरूको प्रिय, पूत्रवान्, माताको प्रिय, धनवान्, त्यागी, सुन्दर सेवकवाला, दयालु, थुप्रै बन्धुवाला एवम् अरूबाट सुख पाउनेवाला हुनसक्छ ।

कुम्भ राशिको मान्छेः- दाता, अल्छी, कृतज्ञ, सवारी साधनयुक्त, सुन्दर दृष्टि, सौम्यमूर्ति, धन-विद्याको उद्योगी, भ्यागुताको समान पेटवाला एवम् निर्भयी हुनसक्छ ।

मीन राशिको मान्छेः- गम्भीर चेष्टावाला, शूर, बोलक्कड, क्रोधी, कृपण, ज्ञानी, गुणले पुज्य, कुलमा प्रिय, देवभक्त छिटो हिँड्ने, सङ्गीतज्ञ, सौम्य शरीर एवम् बन्धुहरूको प्रिय हुनसक्छ ।

## राशिको स्वामी

| ग्रहहरू | राशि स्वामी |
|---|---|
| सूर्य | सिंह |
| चन्द्र | कर्कट |
| मंगल | मेष, वृश्चिक, |
| बुध | मिथुन, कन्या, |
| वृहस्पति | धनु, मीन, |
| शुक्र | वृष, तुला, |
| शनि | मकर, कुम्भ, |

## राशिको जाती

| राशिहरू | राशिको जाति |
|---|---|
| कर्कट, वृश्चिक, मीन, | ब्राहमण |
| मेष, सिंह, धनु, | क्षत्रिय |
| वृष, कन्या, मकर, | वैश्य |
| मिथुन, तुला, कुम्भ | शुद्र |

पुरूष राशिः- मेष, मिथुन, सिंह, तुला, धनु, कुम्भ,

स्त्री राशिः- वृष, कर्कट, कन्या, वृश्चिक, मकर, मीन,

# दिशा स्वामी राशि

| राशिहरू | दिशा |
|---|---|
| मेष, सिंह, धनु, | पुर्व |
| वृष, कन्या, मकर, | दक्षिण |
| मिथुन, तुला, कुम्भ, | पश्चिम |
| कर्कट, वृश्चिक, मीन | उत्तर |

# जन्म नक्षेत्र फलकथन

अश्वनि नक्षेत्रमा जन्मेको मान्छेः- सुन्दर, भाग्यवान्, कार्यकुशल, स्थुल शरीर,धनवान् एवम् लोकप्रिय हुनसक्छ ।

भरणी नक्षेत्रमा जन्मेको मान्छेः- निरोगी, सत्यवत्ता, उत्तम विचारवाला, दृढप्रतिज्ञ, सुखी एवम धनी हुनसक्छ ।

कृतिका नक्षेत्रमा जन्मेको मान्छेः- कृपण, पापविचार, क्षुधापीडित, दुःखी एवम् असत्कर्ममा मन दिनेवाला हुनसक्छ ।

रोहिणी नक्षेत्रमा जन्मेको मान्छेः- धनवान, कृतज्ञ, मेधावी, राजमान्य, प्रिय वत्ता, सत्यवादी एवम् सुन्दर हुनसक्छन ।

मृगशिरा नक्षेत्रमा जन्मेको मान्छेः- चञ्चल, चतुर, धैर्यवान, नकली वस्तु वनाउनेवाला, स्वार्थी अहङ्कारी एवम् परद्वेषी हुनसक्छ ।

आर्द्रा नक्षेत्रमा जन्मेको मान्छेः- कृतघ्न, अहङ्कारी, पापबुद्धि, शठ एवम् धनधान्यले हीन हुनसक्छ ।

पुष्य नक्षेत्रमा जन्मेको मान्छेः- देव-धर्मलाई मान्नेवाला, धनवान्, पुत्रयुत्त, विद्वान्, शान्त, सुन्दर एवम् सुखी हुनसक्छ ।

अश्लेषा नक्षेत्रमा जन्मेको मान्छेः- सबै कुरा खाने, क्रूर स्वभाव, कृतघ्न, धूर्त, दुष्ट एवम् आफ्नो कार्य पूरा गर्नेवाला हुनसक्छ ।

मघा नक्षेत्रमा जन्मेको मान्छेः- थुप्रै सेवक राख्ने, धनी, भोगी, पिताभत्त, उद्योगी, सेनापति एवम् राजाको आश्रित हुनसक्छ ।

पुर्वाफाल्गुनी नक्षेत्रमा जन्मेको मान्छेः- विद्या, एवम् पशुधनयुत्त, गम्भीर, स्त्रीहरूको प्रिय, सुखी एवम् विद्वान द्वारा पूजित हुवसक्छ ।

उत्तराफाल्गुनी नक्षेत्रमा जन्मेको मान्छेः- जितेनद्रिय, शूरवीर, कोमल वत्ता, शस्त्रविद्यामा निपुण महायोद्धा एवम् लोकप्रिय हुनसक्छ ।

हस्ता नक्षेत्रमा जन्मेको मान्छेः- मिथ्याभाषी, ढीठ, मद्यपार्य बन्धुहीन, चोरस्भावको एवम् परस्त्रीप्रेमी हुनसक्छ ।

चित्रा नक्षेत्रमा जन्मेको मान्छेः- स्त्रीपुत्रादियुत्त, सन्तोषी, धनवान, देव-व्राह्मणभत्त हुनसक्छ ।

स्वाती नक्षेत्रमा जन्मेको मान्छेः- चतुर, धर्मात्मा, कृपण, लोकप्रिय, सुशील एवम् देवभत्त हुनसक्छ ।

विशाखा नक्षेत्रमा जन्मेको मान्छेः- भोगी, अभिवानी, निष्ठुर, भगडालु एवम् कुस्त्रीसेवी हुनसक्छ ।

अनुराधा नक्षेत्रमा जन्मेको मान्छेः- पुरूषार्थ गर्न विदेश जाने, बन्धुहरूको कार्य गर्ने एवम् प्रसन्न रहनेवाला हुनसक्छ ।

ज्येष्ठा नक्षेत्रमा जन्मेको मान्छेः- बहुमित्रवाला, प्रधान, कवि, दानी, विद्वान्, धर्मात्मा एवम् तल्लो जातबाट पूजित हुनसक्छ ।

मुल नक्षेत्रमा जन्मेको मान्छेः- सुखी, धन-वाहनयुत्त, हिंसक, बलवान्, स्थिर कार्य गर्ने, शत्रु परास्त गर्ने एवम् विद्वान् हुनसक्छ ।

पुर्वाषाडा नक्षेत्रमा जन्मेको मान्छेः- शरणागतको रक्षा गर्ने, भाग्यवान्, लोकप्रिय एवम् सबै काममा चतुर हुनसक्छ ।

उत्तरषाडा नक्षेत्रमा जन्मेको मान्छेः- बहुमित्रवाला, हृष्ट-पुष्ट, लामो कद, विजयी, सुखी, वीर एवम् विनययुत्त हुनसक्छ ।

अभिजित नक्षेत्रमा जन्मेको मान्छेः- सुन्दर रूप, साधुप्रिय, विनीत, यशस्वी, देव-विप्रभत्त, स्पष्टवत्ता एवम् कुलमा श्रेष्ठ हुनसक्छ ।

श्रवण नक्षेत्रमा जन्मेको मान्छेः- कृतज्ञ, सून्दर, दाता, गुणयुत्त, लक्ष्मीवान् एवम् बहु सन्तानले युत्त हुनसक्छ ।

धनिष्ठा नक्षेत्रमा जन्मेको मान्छेः- सङ्गीतप्रिय, बन्धुमा मान्य, सुवर्णादि रत्नयुत्त तथा थुप्रैको पालक हुनसक्छ ।

शतभिषा नक्षेत्रमा जन्मेको मान्छेः- कृपण, धनवान्, परस्त्रीप्रेमी एवम् विदेशमा बस्न खोज्ने हुनसक्छ ।

पूर्वभाद्रपद नक्षेत्रमा जन्मेको मान्छेः- वत्ता, सुखी, सन्तान युत्त, सुताहा एवम् व्यर्थमा समय बिताउने हुनसक्छ ।

उत्तरभाद्रपद नक्षेत्रमा जन्मेको मान्छेः- गौरवर्ण, बलमान्, धर्मात्मा, शत्रु परास्त गर्ने एवम् साहसी हुनसक्छ ।

रेवती नक्षेत्रमा जन्मेको मान्छेः- पवित्र, कार्यमानिपुण, साधु, वीर, विद्वान् एवम् धनधान्यले युत्त हुनसक्छ ।

## कालपुरूषका अंगहरू



# पितृदोष!!!

कुण्डलीमा सूर्यसँग र राहु वा केतुको मिलन भएको अवस्थालाई पितृदोष भन्ने गरिन्छ ।

यस दोषको कारण मानिसले दैनिक जीवनमा बाधा,कष्ट र पीडा भोग्नु पर्दछ ।

विवाहमा विलम्ब,विवाह पछिको सम्बन्धमा दरार,

समयमा काम नहुनु वा अन्तिममा आएर काम विग्रनु,

कुलतमा फस्नु, व्यवसाय परिवर्तन भईरहनु ,

नोकरीमा समस्या देखिरहनु, गर्भ वा गर्भधारणमा समस्या देखिनु , सुस्त मनस्थिति र दुर्वल बच्चाको जन्महुनु, जन्मिएका बालबच्चाहरु सबल नहुनु , निर्णय क्षमतामा कमी आउनु, रिसाहा तथा घमण्डी पितृदोषबाट सिर्जना हुने समस्याहरु हुन् ।

कुण्डलीमा सूर्यलाई पिता र चन्द्रमालाई माताको नैसर्गिक कारक ग्रह मान्ने गरिन्छ । सूर्य बसेको स्थान वा सूर्यबाट नवौँ स्थानबाट पिता, पैतृक सम्पत्ती, बावु छोराको सम्बन्धको बारेमा हेरिन्छ ।

चन्द्रमा वा चन्द्रमाको चौथो भावबाट माता, मातृसुख, आमाछोराको सम्बन्ध आदिको बारेमा हेरिन्छ।

त्यसबाहेक ज्योतिष शाश्त्रमा सूर्य र मङ्गललाई रगत र रक्तसम्बन्धको कारक ग्रह समेत मानिन्छ ।

जब कसैको जन्मकुण्डलीमा यी दुईवटा महत्वपूर्ण ग्रह पापी,

निर्वल वा अरिष्ट ग्रहका साथमा वा अशुभ भावमा बसेको अवस्था हुन्छ, त्यस्तो मानिस पितृदोषको कुनै न कुनै समस्याबाट पीडित हुन्छ ।

जब कुनै व्यत्तिको कुण्डलीमा लग्न भाव र पञ्चम भावमा ( सूर्य, मंगल, र शनि )

विराजमान छन भने पितृदोष हुन्छ | अर्को शब्दमा भन्दा अष्तम भावमा गुरू र राहु एक साथ बसेका छन भने पितृदोष हुन्छ | राहु केन्द्रमा (१,४,७,१०) भावमा र त्रिकोण (१,५,९) भावमा मौजूद छ भने पितृदोष हुन्छ | सूर्य चंद्रमा र लग्नेश को राहु सँग सम्बन्ध हुन्छ भने पितृदोष हुन्छ | नवम भावमा सूर्य र राहु को युति छ भने पितृदोष हुन्छ |

जन्म कुण्डलीबाट लग्न,पञ्चम र नवम भावको स्वामी ग्रह पनि व्यक्तिको व्यक्तित्व विकास र उन्नति प्रगतिमा सहयोगी ग्रह हुन् । यिनैमध्ये कुनै ग्रह निर्वल छ भने आंशिक रूपमा पितृदोष नै मान्ने गरिन्छ ।

१. सूर्य र राहु वा केतुको मिलन (पूर्ण पितृदोष)

२. सूर्य, चन्द्रमा वा लग्नेशको त्रिकस्थान ६, ८, १२ मा उपस्थिति (आंशिक पितृदोष)

३. पञ्चमेश र राहु वा केतुको मिलन (सन्तान बाधक आंशिक पितृदोष)

४. भाग्येश र राहु वा केतुको मिलन (भाग्य बाधक आंशिक पितृदोष)

५. सूर्य र शनिको एकआपसमा पूर्ण दृष्टि वा मिलन (पदच्युत योग, पूर्ण पितृदोष)

६. मङ्गल र शनिको एकआपसमा पूर्णदृष्टि वा मिलन (मान्दी योग, आंशिक पितृदोष)

७. मङ्गल र राहु वा केतुको एकआपसमा पूर्ण दृष्टि वा मिलन (अङ्गारक योग, आंशिक पितृदोष)

८. चन्द्रमा र राहु वा केतुको मिलन (मातृदोष, आंशिक पितृदोष)

कसरि सृर्जित हुन्छ पितृदोष ?

हाम्रो परिवारमा कुनै अग्रज तथा पूर्वजको असमायिक वा अकालमा मृत्यु हुँदा, मृत्यु भईसकेपछि मृत्युवरण गर्ने मानिसको विधि विधानले अन्तिम संस्कार भएन भने वा जीवित रहँदा उसले गरेका कुनै भाकल वा इच्छा पूर्ण हुन सकेन भने त्यस्ता मृतक मानिसको आत्मा उसको बसोबास भएको घर वा वंशजका बीचमा नै भौंतारिने गर्दछ ।

त्यसरी भौंतारिएका मृत पूर्वजहरूको अतृप्त आत्माले परिवारका सदस्यहरूलाई कष्टप्रदान गरी आफ्नो इच्छा पूर्ण गर्न दबाब दिइरहेको हुन्छ ।

एकातिर यो प्रकरण व्यक्ति स्वयंले निद्रा,सपना वा अन्य कुनै प्रकारले थाहा पाएको स्थिति पनि हुन्छ भने कतिपयको जन्मकुण्डलीमा पितृदोषका रूपमा स्पष्ट देखिने पनि गर्दछ ।शाश्त्रमा उल्लेख गरिएको छ,मानिसको मृत्यु भईसकेपछि छोरा वा आफन्तबाट काजक्रिया गर्नुपर्दछ । त्यसरि विधि पूर्वक गरिने काजक्रियाबाट मात्र मृतात्माहरू मुक्त हुने बताइएको छ ।

जसको अन्तिम संस्कार विधिवतरुपमा सम्पन्न भएको हुँदैन, कुलमा छोराको अभाव, भए पनि शारीरिक, मानसिक वा वौद्धिक रूपमा कमजोर वा अशक्त हुन्छन्।

कुनै व्यक्तिले पिताको हत्या गर्दछ, उनलाई अपमान गर्दछ वा कुनै किसिमले मानसिक तनावमा राख्ने प्रयास गर्दछ अथवा पिताको आत्मसम्मानमा ठेस पुग्ने कुनै क्रियाकलापमा संलग्न हुन्छन् ।

जसले छोराछोरीको सुखबाट बञ्चित हुनुपर्दछ । मरणपछि सन्ततिले गरेका क्रियाकर्म र वार्षिक श्राद्ध गरेका हुँदैनन् भने मृतकको आत्माले मुक्ति प्राप्त गर्न सक्दैनन् वा तिनको आत्मा अतृप्त रहने गर्दछ ।

अतः कसैको परिवारमा आफ्ना कुनै पूर्वजको अतृप्त आत्माको कारण बनेर उसको कुण्डलीमा पितृदोष उपस्थित भएको देखिन्छ ।

पितृदोषका लक्षण र निवारण!!

पितृदोषका लक्षण के के हुन? पितृदोष भएमा के के हुनसक्छन्?

कुनै मानिसको कुण्डलीमा पितृदोष देखिएको छ भने बिभिन्न समस्याहरु जीवनमा भोग्नु पर्दछ ।

१. घरमा प्राय सधै विवाद,झगडा भइरहन्छ ।

२. धन कमाउन बढि नै संघर्ष गर्नुपर्दछ वा कमाएको धन सम्पत्ती सहि ठाउँमा सदुपयोग हुदैन ।

३. रोजगारी वा व्यवसायमा समस्या । उन्नति प्रगति, बढुवा, स्थायित्व आदिमा समस्या देखिरहन्छ ।

४. काम अन्तिम घडीमा बिग्रिरहन्छ । मिहेनत र परिश्रमको फल ढिला मात्र प्राप्त हुन्छ ।

५. रोगव्याधिको चपेटामा परिरहन्छन् । बोटबिरुवा र फूल समेत फस्टाउँदैनन् । घरमा पालेका पशु वा पंक्षीको वंशवृद्धिमा पनि समस्या देखिन्छ । छाना वा भित्तामा पीपल वा अन्य बिरुवाहरू उम्रन थाल्दछन् ।

६. क्षमता अनुसारको नोकरी पाउँदैन, उचित समयमा बढुवा वा ग्रेडिङमा समस्या देखिन्छ ।

यदि यस्ता किसिमका लक्षणहरु जीवनमा वा परिवारमा सम्बन्धमा सम्बन्धि भित्रमा देखिएमा पितृदोष भनेर बुझ्दा हुन्छ ।

जीवनको अधिकांश समय हातमुख जोर्नका लागि मात्र खर्चनु पर्ने परिस्थिति देखिन्छ । आफूले सम्पत्ती जोड्नु त कता हो कता ? बरु भौतिक सम्पत्ती घट्दै जान्छ ।

यी समस्या पितृदोष भएका मानिसहरुमा देखिने समस्या हुन् । तर माथि बताइएका समस्याहरूमध्ये अधिकांश समस्या तपाईको जीवनमा भोग्नु परिरहेको छ भने तपाईले तलका उपायहरू अवलम्बन गर्नु उपयोगि हुन जान्छ।

पितृदोषको निवारण!!

पितृदोषलाई न्यूनीकरण वा निवारण गर्न सकिन्छ । तर डिजिटल पुस्ताका मानिसहरूको व्यस्त जीवनचर्या, भौतिक जगतका सुखसुविधा र विलासिता प्रतिको मोह, श्रद्धा, निष्ठा, समर्पणभाव, आस्था र आध्यात्मिक लगावमा कमी हुनाले यी उपायको अवलम्बन गरी आफूले व्यहोरिरहेका समस्याहरु निवारण गर्न चासो दिएका हुदैनन् ।

१. प्रत्येक दिन विहान स्नान गरिसकेपछि आफ्ना मातृ पितृको नाम उच्चारण गरि दक्षिण फर्किएर तीन तीन अञ्जुली जल अर्पण गर्नु पर्दछ ।

२. अभिभावकहरुको जानी वा नजानी अपमान गर्नु हुँदैन । यदि कसैलाई जानी वा नजानी अपमान गरिएको छ वा उनको आत्मसम्मानमा ठेस पुर्याउने काम भएको छ भने तिनीहरुसँग क्षमायाचना गर्नुपर्दछ ।

निजको मृत्यु भइसकेको छ भने नित्य तर्पण गरेपछि सूर्य तर्फ फर्किएर मैले जानी नजानी गरेका अपराध प्रति क्षमापाऊँ भनी क्षमायाचना गर्नु पर्दछ ।

पितृहरूसँग क्षमा माग्दा कुण्डलीमा रहेको वृहस्पति ग्रह बलियो हुन्छ, जसले सामाजिक सम्मान, वंशवृद्धि र निर्णय क्षमतामा सकारात्मक फल प्रदान गर्दछ ।

३. आफूलाई मन्त्र दिने, ज्ञान दिने वा उचित मार्गदर्शन गर्ने गुरुतुल्य व्यक्तिलाई दिनैपिच्छे प्रातः कालमा प्रणामादि वन्दना गर्ने अभ्यास गरेमा पनि पितृदोष शान्त हुन्छ । गुरुतुल्य कुनै पनि व्यक्तिसित सम्बन्ध बिगार्नु हुँदैन ।

४. कुनै धार्मिक वा परोपकारी काममा दिएको वा दान गरेको धनको सार्वजनिक उद्घोष गराउनु हुँदैन, त्यसैले यस्तो दोष भएका व्यक्तिले गुप्तदान गर्नु पर्दछ । तर अयोग्य र अनुचित ठाउँमा दान गर्नु पनि हुँदैन ।

५. पुरानो मन्दिर, कुलप्रतिष्ठान वा सामाजिक संस्थाको जीर्णोद्धार गराउनु वा जीर्णोद्धार गर्ने क्रममा सकेको सहयोग गर्नु पर्दछ ।

त्यस्तै कुनै देवीदेवताको मन्दिरमा इच्छा पूरा भएन भनेर जान वा दर्शन गर्न छाड्नु भएको छ भने पुनः त्यहाँ दर्शन गर्ने जाने अभ्यास गर्नुपर्दछ ।

६. प्रत्येक पक्षमा पर्ने एकादशी र द्वादशी तिथिका दिन पितृहरूको सम्झना गरी गरीव गुरुवा वा व्राह्मणलाई भोजन, सिदा र दक्षिणा आदि प्रदान गर्नुपर्दछ ।

७. प्रत्येक महिनामा पर्ने औंसीका दिन हविष्यान्न भोजन गर्ने, बेलुकाको छाक बार्ने (निशि बार्ने), पितृहरूको तर्पणादि गर्ने गर्नु राम्रो हुन्छ ।

अरु बेला यो कर्म गर्न सकिएन भने पनि पितृपक्षमा पर्ने अमावस्या (जमरे औंसी) मा अवश्य गर्नुपर्दछ ।

८. सार्वजनिक स्थानमा पीपल वा केराको बोट विहानको भोजनकालमा गाई, कुकुर, काग आदिलाई भोजनादि प्रदान गर्नाले पितृदोष निवारण हुन जान्छ।

रोगी, भिखारी, दुःखी, दारिद्री,वृद्ध वृद्धा, अशक्त र कुष्ठादि दीर्घरोगबाट थलिएका रोगीहरूको सेवा सहयोग र उपकार ले पितृहरु प्रसन्न हुन्छन् यस्ले पितृदोष निवारण हुन जान्छ। घरपरिवार भित्रको महिलाहरूको विशेष सम्मान र वाहिरका आमा दिदिवहिनिहरुको पनि मान सम्मान ले पितृदोष निवारण हुन जान्छ।

९. प्रत्येक पक्षको त्रयोदशीका दिन पर्ने प्रदोषको व्रत लिने, भगवान नारायण, शिवजीको पूजाआज गर्ने र पितृहरूसँग क्षमायाचना गर्नाले पितृदोष निवारण हुनजान्छ।

१०. सके दिनदिनै वा नसकेको खण्डमा पनि मिलाएर श्रीमद्भागवतको पाठ पारायण गर्ने गराउने, गीताको नवौं अध्याय वा महाभारतको शान्तिपर्वको मूल संस्कृत पाठ नियमित रूपमा गर्नाले पितृदोष निवारण हुनजान्छ।

११. नजिकै कुनै तीर्थस्थल विष्णुपादुका, कोकाकोसी सङ्गम, गोकर्ण, देवघाट, त्रिवेणी, मुक्तिक्षेत्र, वेत्रावती आदि तीर्थस्थलमा त्रिपिण्डी श्राद्ध गरेमा पनि पितृदोषको निवारण हुन्छ।

त्रिपिण्डी श्राद्धमा सत्य, रज,तम, बिशेश तीन योनिमा गएका तिनै गुणहरु मध्ये कुनै पनि गुण प्राप्त गरेका अज्ञात पितृहरुको आह्वान, स्थापन, र पुजा हुन्छ, जस्ले गर्दा आफ्ना गोत्रमा, वंशमा, कुलमा भएका अज्ञात पितृहरुको अपचार, अस्म्मान, र असन्तुष्टि, वाट लागेका पितृदोषहरुवाट पनि छुटकारा पाउन सकिन्छ।

१२. पितृहरुको श्राद्धको दिन श्राद्ध,तर्पण पिण्ड सिदा दान वस्त्र दान र ब्राह्मण भोजन अनिवार्य गराउनु पर्छ यसो गर्दा पितृदोष निवारण हुनजान्छ।

१३. प्रत्येक  अमावस्यको दिन पितृहरुको नाममा ब्राहमण भोजन गराउनु पर्छ। यसो गर्दा पितृदोष निवारण हुन जान्छ।

१४. जानि नजानि पनि यदि तिर्थहरुमा पुगिएको भये तिर्थ श्राद्ध वा आफ्ना पितृहरुको नाम वा सम्झनामा तर्पण अवस्य गर्नु पर्छ। यसो गर्दा पितृदोष निवारण हुनजान्छ।

१५.पितृहरुको फोटा अगाडि एउटा कलशमा पानी राख्ने दिनै धुप वा वाति वालिदिने फुलका सुन्दर माला लगाइदिने र दिनै एकपटक ढोगेर आशीर्वाद माग्नुपर्छ। यसो गर्दा पितृहरु संधै प्रसन्न रहन्छन् जसले गर्दा पितृदोष निवारण हुन जान्छ।

# ग्रहको मित्र र शत्रु

| ग्रह | मित्र | शत्रु | समा |
|---|---|---|---|
| सूर्य | चन्द्र, मंगल, गुरू | शुक्र,शनि,राहु, | बुध |
| चन्द्रमा | सूर्य, बुध | राहु | मंगल,गुरू,शुक्र,शनि, |
| मंगल | सूर्य,चन्द्र,गुरु | बुध,राहु, | शुक्र,शनि, |
| बुध | सूर्य,शुक्र,राहु, | चन्द्र, | मंगल,गुरू,शनि |
| गुरू | सूर्य,चन्द्र,मंगल | बुध,शुक्र, | शनि,राहु, |
| शुक्र | बुध,शनि,राहु | सूर्य,चन्द्र, | मंगल,गुरू |
| शनि | बुध,शुक्र, | सुर्य,चन्द्र,मंगल, | गुरू |
| राहु,केतु | शुक्र,शनि, | सुर्य,चन्द्र मंगल, | बुध,गुरू |

# ग्रहको उच्च निच

| ग्रह | उच्च | निच | अंश |
|---|---|---|---|
| सूर्य | मेष | तुला | १० |
| चन्द्रमा | वृष | वृश्चिक | ३ |
| मंगल | मकर | कर्कट | २८ |
| बुध | कन्या | मीन | १५ |
| गुरू | कर्कट | मकर | ५ |
| शुक्र | मीन | कन्या | २७ |
| शनि | तला | मेष | २० |
| राहु,केतु | मिथुन | धनु | १५ |

# ग्रहको पुर्ण दृष्टि

| ग्रह | पुर्ण दृष्टि |
|---|---|
| सूर्य | ७ |
| चन्द्रमा | ७ |
| मंगल | ४/७/८ |
| बुध | ७ |
| गुरू | ५/७/९ |
| शुक्र | ७ |
| शनि | ३/७/१० |
| राहु,केतु | १० |

# जन्मलग्न फल कथन

मेष लग्नमा उत्पन्न हुने जातक :- तीक्ष्णस्वभाव, मानी, धनवान्, सदाचारी, क्रोधी, स्वजनद्वेषी, पराक्रमी, तथा अरूको स्नेही हुनसक्छ ।

वृष लग्नमा उत्पन्न हुने जातक : - विद्वान, गुरुजनप्रेमी, प्रियवक्ता, गुणी, धनी, लोभी योद्धा, एवम् अरूको प्रिय हुनसक्छ ।

मिथुन लग्नम उत्पन्न हुने जातक : - मानी, आफन्तबाट प्रिय, त्यागी, भोगी, धनी, कामी, दीर्घसूत्री (जालभेल र षडयंत्र गर्ने) एवम् शत्रुलाई जित्नेवाला हुनसक्छ ।

कर्कट लग्नमा उत्पन्न हुने जातक : - धर्मात्मा, भोगी, सबैको प्रिय, मधुर अन्नपानको भोगी, सुन्दर तथा धनवान हुनसक्छ ।

सिंह लग्नमा उत्पन्न हुने जातक : - भोगी, शत्रुलाई जित्ने, स्वल्प उदरवाला, थोरै पुत्रवाला, उत्साही एवम् युद्धमा पराक्रमी हुनसक्छ ।

कन्या लग्नमा उत्पन्न हुने जातक :- अनेक शास्त्रमा निपुर्ण, सौभाग्वान्, गुणसम्पन्न, सूरूप एवम् रूपवानहरूको प्रिय हुनसक्छ ।

तुला लग्नमा उत्पन्न हुने जातक :- बुद्धिमान, राम्रो कामले जीविकोपार्जन गर्ने, विद्वान, कलामानिपुर्ण, एवम् लोकमान्य हुनसक्छ ।

वृश्चिक लग्नमा उत्पन्न हुने जातक :- शूर, धनी, ज्ञानी, कुलमा श्रेष्ठ, विवेकी एवम् परिवारपोषक हुनसक्छ ।

धनु लग्नमा उत्पन्न हुने जातक :- नीतिज्ञ, धनी, बुद्धिमान, लोकपूज्य, कुलमा श्रेष्ठ, एवम् पुत्रपौत्रादिले युत्त हुनसक्छ ।

मकर लग्नमा उत्पन्न हुने जातक :- नीचक्रमी, बहुसन्तानवाला, लोभी, अल्छी, धैरै खर्च गर्ने, तर आफ्नो कार्यमा उद्यत रहने हुनसक्छ ।

कुम्भ लग्नमा उत्पन्न हुने जातक :- स्थिरबुद्धिवाला, सहृदयी, परस्त्रीरत, कोमल देह एवम् सुखी हुनसक्छ ।

मीन लग्नमा उत्पन्न हुने जातक :- रत्नादिले पुर्ण, अल्पकामी, कृश-शरीर एवम् धैरै सोचेर कार्य गर्नेवाला हुनसक्छ ।

# विविध वार जन्मफल

आईतवार जन्मेको मान्छे :- पित्तप्रकृति, बाल्यावस्थामा अलिक रोगी, चतुर, तेजस्वी, युद्धप्रिय, दानी एवम् उत्साही स्वभावको हुनसक्छ ।

सोमवार जन्मेको मान्छे :- बाल्यावस्थामा अलिक रोगी, बुद्धिमान, प्रियवक्ता, शान्त, राजाश्रित, दुःख सुखलाई सम्मान सम्झिने स्वभावको हुनसक्छ ।

मङ्गलवार जन्मेको मान्छे :- अलिक रोगी, कुटिल बुद्धि, पृथ्वीजीवि, युद्धप्रिय, महाबली, सेनापति या जनपालक स्वभावको हुनसक्छ ।

बुधवार जन्मेको मान्छे :- लेखन कार्यसँग सबन्धित कार्य गर्न मनपराउने, प्रियवक्ता, विद्वान, बुद्धिमान, सौन्दर्य एवम् सम्पत्ती युक्त हुनसक्छ ।

विहीवार जन्मेको मान्छे :- धनवान्, विवेकी, लोकमान्य, अध्यापक या राजामन्त्री स्वभावको हुनसक्छ ।

शुक्रवार जन्मेको मान्छे :- चञ्चलचित्त, धनोपार्जन एवम् क्रीडामा अनुरक्त, सुन्दर एवम् वक्ता स्वभावको हुनसक्छ ।

शनिवार जन्मेको मान्छे :- स्थिर वचनवाला, क्रुर, दुष्ट स्वभावको, पराक्रमी, नीचदृष्टी, विकृत नङ्, अधिक केश, एवम् वृद्धासँग प्रेम गर्ने स्वभावको हुनसक्छ ।

पूषां पुष्टिं दिशतु सततं सन्ततिं शीतरोचि-

भौमो भाग्यं सितकरसुतः शान्तिमाङ्गल्यवित्तम् ।

जीवो राज्यं चिरसुभगतां भार्गवो भुमिमार्की

राहुः सोख्यं शिखिन इति के कीर्तमभ्रलिहां च ॥

अर्थ- सूर्यले पुष्टि, चन्द्रले सन्मति, भौमले भाग्यं, बुधले शान्ति, गुरूले राज्य, शुक्रले सौभाग्य, शनिले पृथ्वी, राहुले सौख्य, केतुले चारै दिशामा कीर्ति प्रदान गरून् ।

• प्रथम भाव :- शीर्ष, शरीर, स्वास्थय, चेहरा, मनस्थिति, मान सम्मान, प्रसिद्धी, आयु, जाती, सुख, दुःख, प्रकृति, योग्यता, स्मरणशक्ति, रूप रङ्ग, शिर, चेहरा, वर्ण, स्थिति, व्यत्तिको स्वभाव, चिह्न, मस्तिष्क, यश, कीर्ति, विवेक, आकृति, गुण, आदि ।

• द्वितीय भाव :- धन, वाणी, वन्धन, देब्रे आँखा, ससुराल, खाद्य पदार्थ, कुटुम्ब आर्थिक दशा,विद्या, वाक् शक्ति, धन कमाउने साधन, स्वतन्त्रता, सच्चाइ शक्ति खान पिन, भोक, धातु (सुन चांदी ) रत्न, हिरा, पन्ना भुक्ति आदि ।

• तृतीय भाव : पराक्रम, कान्छो भाइ वहिनी, दाहिने हात, दाहिने कांध, भाषण कला यात्रा परिवार, नाक, घाटी, कान, गला, दाजुभाइ, भक्ति, भाषण कला, अन्यवाट सहयोग, आफन्त, पराक्रम, पात्रता, वल वीर्य आदि ।

• चतुर्थ भाव : हृदय, सुख, माता, बन्धु, जमिन, जायजेथा, सुखका साधन, छाती, भौतिक सुख, जन सहयोग, अन्तःकरण, वगैँचा, भूमि, सवारी साधन, दुध दिने पशु चौपाय, गाढधन, वाहन मित्र, परोपकार, बाहु आदि ।

• पञ्चम भाव : सुत, बुद्धि, सन्तान, राज्य, चातुर्य, विद्या, शिक्षा, शिष्य, गुरु, मन

बहलाउने काम वा साधन, ऐश्वर्य, कृतिहरू, कान्य, कला, मन्त्र, योगाभ्यास,

आउनेवाला जन्म, नीति, न्याय, जुवा, चिट्ठा, जासुसी आदि ।

• षष्ठ भाव: शत्रु, रोग, ऋण, झगडा, चोर भय, सङ्ग्राम, पेट, दुःख, नोकर, सेवक,घाउ खटिरा, कैदी, आगोवाट भय, शत्रुभय, नोक्सानी अन्याय, पाप, मावली, काकी,सौतेनी आमा, कमम्र, फुपू, आदि ।

• सप्तम भाव :-भार्या वा पत्नी र मुत्राशय, गुप्ताङ्ग जनेन्द्रिय, ढाड, दांत, दैनिक

रोजगार, पति, काम व्यवहार अदालती झगडा, प्रवास, ऋण, व्यापारमा भागिदारी.रोजगार, विना परिश्रम लाभ, घमण्ड, अहंकार छिमेकी आदि ।

• अष्टम भाव :-मृत्यु आयु. संकट, गुदद्वार, गुप्तकुरा गुप्त विद्या. इन्द्रिय शक्ति

कूटनीति दुर्घटना, चोरी, निन्दा, कष्ट, विरामी कारावास, यौन सुख, गुप्त धन,

गुदद्यस्थान आदि ।

• नवम भाव : भाग्य, दान, धर्म, तीर्थ यात्रा, आत्मिक शक्ति, भविष्यवाणी, स्वप्न, वुद्धि,आहार, मित्र, नम्रता, धार्मिक विचार, ईश्वरीय साधना, कृतिहरु, सइस, पेट, तिघ्रा, यज्ञ,जेठान, ज्वाई, जीवन साथी, साला साली, पर्यटन, भाउजू, प्रवास आदि ।

• दशम भाव कर्म, पिता, छाती, घुंडा, सासू, प्रवृत्ति, कृषि, भूमि, पदवी. सरकारी

नोकरी, राज्य गर्ने इच्छा मान सम्मान, प्रसिद्धि, सामाजिक कार्य, पारवाहन.

कार्यव्यवसाय आदि ।

• एकादश भाव आय वा लाभ, पैतृक सम्पत्ति, उच्च पद प्राप्ति इच्छा पुर्ति क्रय

विक्रय, विद्या, आयु. राजकीय पुरस्कार, प्रशन्नता, हात्ती घोडा, द्रव्य लाभ कांध

वायां हात, कान, पिडौला, ब्याज लाभ, बुहारी, आदि ।

• द्वादश भाव व्यय, हानि, सरकारी दण्ड, शत्रु वदनामी, दुर्भावना, कारावास, देश

निकाला, दान, कप्ट चोरीको सामान, विदेश यात्रा, सुत्ने कोठा, दाइने आंखा, भोग,शान्ति, पैताला, आत्महत्या, वैदेशक यात्रा. राजकीय संकट आदि ।

# विभिन्न भावबाट विचार गरिने कुराहरू

**यो भावः स्वामिसौम्याभ्यां युक्तो दृष्टोयमेधते ।**

**पापैश्चेदन्यथा ज्ञेयो जन्मतः पृच्छतोपि च ।।**

अर्थ- जुन भावमा आफ्नो स्वामी या शुभग्रहको योग अथवा दृष्टि हुन्छ, त्यो भावको वृद्धि र पाप या स्वामीग्रहको शत्रुको दृष्टि हुन्छ, त्यो भावको हानि हुन्छ ।

१. प्रथम भावबाट रूप, वर्ण, चिन्ह, जाति, आयु, सुख, दुःख, साहस

आदि विचार गरिन्छ ।

२. दोस्रो भावबाट धनसम्बन्धी कुरा, सुन, चाँदी, धातु, क्रय-विक्रय,

रत्न, भण्डार, द्रव्य सङ्ग्रह आदि विचार गरिन्छ ।

३. तेस्रो भावबाट सहोदर, सेवक, पराक्रम एवम् अनुजीवी आदिको

विचार गरिन्छ ।

४. चौथो भावबाट मित्र, घर, गाउँ, पशुधन, खेती, व्यापार, जागिर

आदिको विचार गरिन्छ ।

५. पाँचौं भावबाट बुद्धिको प्रबन्ध, सन्तान, नीति, मन्त्रसाधना,

न्याय, विद्या, गर्भस्थिति आदिको विचार गरिन्छ ।

६. छैटौं भावबाट शत्रु समूह, घाउखटिरा आदि रोग, कुकर्म,

रोगको स्थिति, मामा सम्बन्धी कुरा तथा शङ्का आदिको विचार गरिन्छ ।

७. सातौं भावबाट सङ्ग्राम, वाणिज्य, स्त्री-पुरुष, विवाह, यात्रा

आदिको विचार गरिन्छ ।

८. आठौं भावबाट नदी पार हुनु, शस्त्राघात तथा विशेष सङ्कट

आदिको विचार गरिन्छ ।

९. नवौं भावबाट धर्ममा प्रवृत्ति, भाग्योदय, सुशीलता, तीर्थयात्रा,

दान, तप, विनय आदिको विचार गरिन्छ ।

१०. दसौं भावबाट व्यापार, मुद्रा, राज- आदर, राज्यसम्बन्धी

प्रयोजन, पिताको सुख-दु:ख, विशेष कर्मको सफलता, उच्च पदप्राप्ति

आदिको विचार गरिन्छ ।

११. एघारौं भावबाट वाहन, सुवर्ण, वस्त्र, छत्र, पालकी, माङ्गलिककार्य एवम् सबै प्रकारको लाभ विचार गरिन्छ ।

१२. बाह्रौं भावबाट हानि, दान, खर्च, दण्ड, बन्धन आदि विचार गरिन्छ ।

द्रष्टव्य- फलादेश गर्दा ज्योतिषीले जहिले पनि सम्बन्धित कुराको

भावमा बसेका ग्रहको आधारमा भन्दा पनि त्यस् भावको भावेश बसेको

भाव, भावेशको अवस्था, भावेशमाथि पर्ने अन्य ग्रहको दृष्टि तथा

दशा-अन्तर्दशाको आधारलाई बढी जोड दिनुपर्छ ।

जुनसुकै भावको भावेश शुभभाव, शुभराशिमा शुभ ग्रहसँग, शुभ

ग्रहको दृष्टिमा अथवा आफ्नो घरमा, मित्रको घरमा बसेको भए बलिया

भएर शुभफल प्रदान गर्दछन् ।कुनै पनि भावको भावेश शुभग्रह भए पनि अशुभभाव (६/८/१२)मा, अशुभ ग्रहको घरमा अथवा अशुभ ग्रहद्वारा दृष्ट भएर

बसेको भए कमजोर मानिन्छन् । तिनीहरूले दिने फल कमजोर अथवा

अनिष्टकारी पनि हुनसक्छ ।अशुभभावमा अशुभ ग्रह बस्नुलाई भने राम्रो मानिन्छ । तर अशुभभावमा बसेको राशिको स्वामी यदि शुभभावमा बसेको भए त्यसले

त्यो भाव र त्यहाँबसेका अन्य ग्रहको शक्तिलाई पनि कमजोर गराइदिन्छ ।

बाह्रौं भावमा बसेको शुक्रलाई भने नराम्रो मानिँदैन ।

१२ भावका कारक ग्रह १) लग्नको कारक ग्रह सूर्य, २) दोस्रो, पाँचौं तथा एघारौंको बृहस्पति, ३) तेस्रोको मङ्गल, ४) चौथोको चन्द्र एवम् बुध, ५) छैटौंको शनि एवम् मङ्गल, ६) सातौंको शुक्र, ७) आठौंको शनि, ८) नवौंको सूर्य एवम्

२४ बृहस्पति, ९) दशौंको बृहस्पति, सूर्य, बुध एवम् शनि तथा १०) बाह्रौं भावको

कारक ग्रह शनि मानिन्छन् ।

द्रष्टव्य- भावकारक ग्रह एक्लै आफ्नो भावमा बसे, त्यसले त्यो

भावको फल बिगार्दछ ।

# पहिलो भाव

कुण्डलीको प्रथम भावलाई लग्न पनि भनिन्छ । लग्न भनेको जातकको करिब-करिब समग्र स्वरूप हेर्ने ऐना हो । यसबाट जातकको वर्ण, स्वभाव, बुद्धि, शारीरिक-मानसिक - बौद्धिक अवस्था, प्रभाव आदि सबै कुराको विचार गरिन्छ । लग्नमा बसेको राशि, राशिस्वामी र ग्रहहरूको अवस्थाको चिन्तनद्वारा जातक कस्तो हुन्छ भनेर करिब करिब सम्पूर्ण कुराको विचार गर्न सकिन्छ ।प्रथम (लग्न) भावमा अङ्क १ छ भने जातक रक्त- गौर वर्णको, कफ प्रकृतिवाला, क्रोधि, गुन नदेख्ने, अल्पबुद्धि, स्थिर, स्त्री, सेवकद्वारा पराजित हुने स्वभावको हुनसक्छ ।अङ्क २ छ भने मानसिक रोगी, आफन्तबाट अपमानित,मित्रवियोगी, कलही, दु:खी, शस्त्रआघाती तथा धन हानि गर्नेवाला हुनसक्छ ।अङ्क ३ छ भने गौरवर्णी, स्त्री आशक्त, राजपीडित, दूतको कामगर्ने, प्रसन्न चित्त, विनीत एवम् सुन्दर केशवाला, गीतज्ञ हुनसक्छ ।अङ्क ४ छ भने गौरवर्ण, पित्त प्रकृति, दानी, प्रौढ, जलक्रीडाप्रिय, बुद्धिमान्, पवित्र, क्षमाशील, धर्मात्मा तथा सेवकको प्रिय हुनसक्छन् ।अङ्क ५ छ भने पाण्डुवर्ण, वात पित्त प्रकृति, मांसप्रिय, रसिकतीक्ष्ण स्वभाव, शूर, प्रौढ एवम् भ्रमणशील हुनसक्छन् ।अङ्क ६ छ भने कफ पित्त प्रकृति, सुशील, स्त्रीस्वभाववाला, लक्ष्मीति(धनि), स्त्रीवश्य, डरपोक, मायावी एवम् कामले पीडित हुनसक्छ ।अङ्क ७ छ भने कफ प्रकृति, सत्यवक्ता, परस्त्रीप्रेमी, राजमान्य देवभक्त हुनसक्छ । अङ्क ८ छ भने क्रोधि, वृद्ध स्वभाव, राजमान्य, गुणवान्,शास्त्ररुचिवाला तथा शत्रुलाई जित्ने स्वभावको हुनसक्छ ।अङ्क ९ छ भने राजप्रिय, कार्यकुशल, ब्राह्मण, देव भक्त,सवारीप्रिय एवम् घोडाको जाँघजस्तै जाँघवाला हुनसक्छ ।अङ्क १० छ भने जलप्रिय, तीव्र, डरपोक, पापाचारी, धूर्त,कफ-बाफपीडित, लामो शरीरतथा ठग प्रकृतिको हुनसक्छ ।अङ्क ११ छ भने स्थिर स्वभाव, वात प्रकृति, जलक्रीडाप्रिय, सानोशरीर, स्त्रीप्रिय, शिष्टाचारी तथा अरूको प्रिय हुनसक्छ ।अङ्क १२ छ भने जलप्रिय, विनयी, शरीरप्रिय, विद्वान्, कृश शरीर, अति क्रोधी, पित्त प्रकृति एवम् यशस्वी हुनसक्छ ।

# दोस्रो भाव

कुण्डलीमा दोस्रो भावलाई धनभाव अथवा धनसञ्चयभाव पनि भनिन्छ । यो भावमा बसेको राशि राशिस्वामी र ग्रहहरूको अवस्था, अन्य ग्रहको दृष्टि आदिको चिन्तनद्वारा जातक कति धनयुक्त होला अथवा नहोला,उसले कसरी कसरी धन जम्मा गर्ला या नगर्ला आदि जस्ता सबै कुराको विचार गरिन्छ ।कुण्डलीको दोस्रो भावमा अङ्क १ छ भने जातक अनेक तरहले धर्म एवम् नीति पूर्वक धनोपार्जन गर्ने, सन्तान पनि नीतिनिपुण, धन, वाहनलेयुक्त एवम् विद्वान् हुनसक्छन् । अक २ छ भने कृषि, पशु, सुवर्ण आदिद्वारा लाभ गरेर धनवान् बन्नसक्छ ।अङ्क ३ छ भने स्त्रीको सहयोगबाट धनलाभ गर्ने तथा साधुसन्तसँग सङ्गत गर्ने हुनसक्छ ।अङ्क ४ छ भने काठको व्यापारबाट धनलाभ गर्नसक्ने, जलमा डुब्ने भय, निस्वार्थी, नीतिपालनमा जोड दिने स्वभावको हुनसक्छ ।अङ्क ५ छ भने पराक्रमद्वारा, वन्यवस्तुबाट धनोपार्जन गर्ने,लोकहितकारी हुनसक्छ ।अङ्क ६ छ भने राज्य अथवा अरूबाट धनलाभ गर्ने हुनसक्छ ।अङ्क ७ छ भने पत्थर, मिट्टी तथा धान्य आदिको व्यापारबाट थुप्रैधनोपार्जन गर्ने हुनसक्छ ।अङ्क ८ छ भने धर्मात्मा, स्त्रीप्रेमी, विनोदी तथा ब्राह्मण-भक्त हुनसक्छ ।अङ्क ९ छ भने धर्मपूर्वक पशु, रस आदिद्वारा धनोपार्जन गर्ने हुनसक्छ ।अक १० छ भने अनेक प्रपञ्च, राजसेवा, खेती, विदेश यात्राआदिबाट धन सङ्ग्रह गर्ने हुनसक्छ ।अङ्क ११ छ भने फल, फूल, जलोत्पन्न वस्तु आदिबाट धनोपार्जनगर्ने, साधुसेवी, चन्दादाता तथा परोपकारी हुनसक्छ ।अङ्क १२ छ भने व्रत, उपवास, विद्या, भूमिभित्रको वस्तुको खोजआदिद्वारा तथा मातापिताद्वारा उपार्जित धनको लाभ गर्ने हुनसक्छ ।

# तेस्रो भाव

कुण्डलीमा तेस्रो भावलाई सहोदर भाव पनि भनिन्छ । यस भावमा भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टिआदिलाई केलाएर जातकका दाजुभाइ, दिदीबहिनी, परिवारभित्रका अन्य कतिपय कुरा,जातकको मन, व्यवहार, उसले पाउने मान-अपमान आदि कैयौं कुराको विचार गरिन्छ ।कुण्डलीको तेस्रो भावमा अङ्क १ छ भने जातक विद्वान्को सेवा गर्ने,परोपकारी, शास्त्रव्यसनी, अनेक विद्याको ज्ञाता तथा राजमान्य हुनसक्छ ।अङ्क २ छ भने राजमित्र, प्रतापी, दानी, यशस्वी, विद्वान्, काव्यकर्तातथा ब्राह्मणभक्त हुनसक्छ ।अङ्क ३ छ भने उत्तम सवारी राख्ने, स्त्रीको प्रिय, सत्यवक्ता, उदार,कुलमा श्रेष्ठ तथा लोकपूज्य हुनसक्छ ।अङ्क ४ छ भने व्यापारीसँग मैत्री गर्ने, खेती गर्ने, धर्मात्मा, सुशीलतथा लोकप्रिय हुनसक्छ ।अङ्क ५ छ भने शूर, कुत्सित मित्रवाला, मनको लोभी, हिंस्रक, पापकुरामा रुचि राख्ने, कठोर भाषण गर्ने एवम् गोरवी हुनसक्छ ।अङ्क ६ छ भने शास्त्रअभ्यासी, सुशील, मित्रको सहयोगबाट धनउपार्जन गर्ने, ब्राह्मण, देव एवम् गुरुजनको भक्त हुनसक्छ ।अङ्क ७ छ भने पापीसँग मैत्री गर्ने, चञ्चलचित्त एवम् चञ्चल कुरा गर्ने हुनसक्छ ।अङ्क ८ छ भने पापी एवम् द्ररिद्रसँग मैत्री गर्ने, गुन नसम्झने,झगडालु, अव्यवस्थित एवम् लोकविरुद्ध आचरण गर्ने स्वभावको हुनसक्छ ।अङ्क ९ छ भने राजमन्त्री, शूर, राजकर्मचारी, हृदयाकर्षक वाक्य एवम् धर्माचरणले सदा प्रसन्न, दया युक्त एवम् युद्धमा कुशल हुनसक्छ ।अङ्क १० छ भने सदा प्रसन्न, पुत्रवान् देव, मित्र, गुरुको भक्त,धनवान् तथा विद्वान् हुनसक्छ ।अङ्क ११ छ भने व्रती, यशस्वी, क्षमाशील, सत्यवक्ता, सुशील,गीतज्ञसँग मैत्री गर्ने तथा दुष्टसँग पनि मेल गर्नसक्ने हुनसक्छ ।अङ्क १२ छ भने धनवान्, पुत्रवान्, पुण्यवान्, अतिथि भक्त एवम् सबैको प्रिय हुनसक्छ ।

# चौथो भाव

कुण्डलीमा चौथो भावलाई सुखभाव पनि भनिन्छ । यहाँ भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टिआदिलाई केलाएर जातकले कस्ता-कस्ता कर्म तथा पुरुषार्थद्वारा सुख पाउला कि नपाउला आदि जस्ता कैयौं कुराको विचार गरिन्छ ।कुण्डलीको चौथो भावमा अङ्क १ छ भने जातकले पशुबाट,स्त्रीबाट, अन्न-पानादिबाट तथा स्वउपार्जित धनबाट सुख पाउनसक्छ ।अङ्क २ छ भने पराक्रम, राजसेवा तथा अन्य कार्यद्वारा प्रशंसित भएर मान्यजन तथा अन्यबाट पनि सुख पाउने हुनसक्छ ।अङ्क ३ छ भने स्त्रीबाट, जलविहारबाट, वनभ्रमणबाट तथा अनेक प्रकारको पुष्प - वस्त्रादिबाट सुख पाउने हुनसक्छ ।अङ्क ४ छ भने सुन्दर, भाग्यवान्, सुशील, स्त्रीको प्रिय,विद्यावान् एवम् सर्वजनको प्रिय हुनसक्छ ।गुणयुक्त,अङ्क ५ छ भने क्रोधले सुख नाशी, कन्या सन्तान वाला तथादरिद्रताको कारण शीलहीन हुनसक्छ ।अङ्क ६ छ भने धन कमाएर दुष्टसँग मैत्री गर्ने, कुरा ओसार्ने, चोरीएवम् मारण-मोहन कार्यको चिन्तन गर्नाले सधैँ दुःख पाउने हुनसक्छ ।अङ्क ७ छ भने सरल, सत्कारी, विद्याविनीत, सुखी, प्रसन्न एवम् धनयुक्त हुनसक्छ ।अङ्क ८ छ भने विपत्तियुक्त, तीक्ष्ण स्वभाव, डरपोक, थुप्रैको सेवागर्ने, शत्रुद्वारा तेजोहत, कार्यकुशल तर बुद्धिहीन हुनसक्छ ।अङ्क ९ छ भने युद्धसम्बन्धी कार्य चिन्तनबाट, वाहनको सेवाबाटतथा आफ्नो प्रारब्धले सुख पाउने हुनसक्छ ।अङ्क १० छ भने जलविहार, बगैंचा, तलाउ आदिबाट, मित्रकोसहयोगबाट तथा कामक्रीडाबाट सुख पाउने हुनसक्छ ।अङ्क ११ छ भने स्त्रीको आश्रयबाट, मिष्ठान्न, पान, फल,शाकपत्रबाट तथा उत्साहवर्द्धक वाक्यको चतुरताबाट सुख पाउने हुनसक्छ ।अङ्क १२ छ भने सदा सुखी, जलको आश्रय अथवा देवताको कृपाद्वारा वस्त्र तथा अन्य पनि कुराले सुख पाउने एवम् मन्दगतिमाहिँड्नेवाला हुनसक्छ

# पाँचौ भाव

कुण्डलीमा पाँचौं भावलाई पुत्र, सन्तान, विद्याभाव पनि भनिन्छ ।यहाँ भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टिआदिलाई केलाएर जातकको विद्या, बुद्धि, सन्तान आदिको अवस्था र तिनीहरूबाट जातकले सुख पाउला कि नपाउला जस्ता सबै कुराको विचार गर्न सकिन्छ ।कुण्डलीको पाँचौं भावमा अङ्क १ छ भने जातकले मित्र - पुत्रको स्नेहले, देवताको सेवाले सुख पाउँछ । तर ऊ पापकार्यमा फसेर चिन्तित पनि हुनसक्छ ।अङ्क २ छ भने जातकको सुन्दरी, सौभाग्यवती, परन्तु सन्तानहीन,लावण्यवती तथा पतिव्रता परायण कन्या हुनसक्छे ।अङ्क ३ छ भने जातकको प्रसन्न, सुखी, सुशील, गुणवान्सँग प्रेम गर्ने, बलवान् पुत्र हुनसक्छन् ।अङ्क ४ छ भने जातकको पुत्र विख्यात, पितृसुखदायक, यशस्वी,उदार, धनवान् एवम् विनयले युक्त हुनसक्छन् ।अङ्क ५ छ भने जातकको पुत्र क्रूर स्वभाव, सुन्दर नेत्रवाला,मत्स्य- मांस प्रिय, कन्या सन्तानवाला, तीव्र, विदेशवासी एवम् क्षुधातुरहुनसक्छन् ।अङ्क ६ छ भने जातकका अधिक कन्या हुनसक्छन् । ती कन्याहरू पतिव्रता, कार्यकुशल, पापहीन तथा आभूषण प्रिय हुनसक्छन्, तर तिनीहरूबाट पुत्र नहुनसक्छ ।अङ्क ७ छ भने जातकका सन्तान सुशील, सुरूपवान्, कार्यमा दक्षएवम् सुन्दर नेत्रवाला हुनसक्छन् ।अङ्क ८ छ भने जातकको पुत्र भाग्यवान्, सुशील, दोषहीन, विनीत एवम् धर्ममा तत्पर रहनेवाला हुनसक्छन् ।अङ्क ९ छ भने जातकको पुत्र सवारी राख्नेवाला, अस्त्र चलाउन निपुण, शत्रुलाई परास्त गर्ने, सेवाकार्य गर्न जान्ने, राजाबाट आदर पाउने तथा अनेक प्रकारका गुणले युक्त हुनसक्छन् ।अङ्क १० छ भने जातकको पुत्रको रूप-बुद्धि-स्वभाव आदि सबै खराब हुनसक्छ ।अङ्क ११ छ भने जातकको पुत्रको गुण-स्वभाव - बुद्धि सबै राम्रो हुनसक्छ ।अङ्क १२ छ र त्यो शुभराशि अथवा त्यहाँ शुभ ग्रह बसेको भए जातकको पुत्र सुन्दर, शीलवान् हुन्छ, तर पापग्रह भए जातक रोगी, कुरूप स्त्री- पुत्रादिको स्वामी हुन्छ ।

# छैटौं भाव

कुण्डलीमा छैटौँ भावलाई रोगभाव, शत्रुभाव, दुःखभाव आदि अनेकौँ नाम दिइएको छ । यहाँ भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टि आदिलाई केलाएर जातकले आफ्नो जीवनमा पाउनसक्ने अनेकौं प्रकारका कष्टका बारे विचार गरिन्छ । यस भावमा कुनै न कुनै राशि त बसेके हुन्छन्, तर भरसक ग्रह भने नबसेकै अथवा पापग्रह मात्रै बसेको राम्रो मानिन्छ । कुण्डलीमा यो भावमा बसेको राशिको स्वामी जहाँ बसेको हुन्छ, त्यसले त्यो ठाउँको भाव, राशि र ग्रहको शक्तिलाई पनि आधा कम गरिदिन्छ ।छैटौं भावमा अङ्क १ भए जातक मान्छेसँग शत्रुता गर्ने स्वभावको हुनसक्छ ।अङ्क २ भए बन्धुवर्गसँग शत्रुता गर्ने हुनसक्छ ।अङ्क ३ भए स्त्री, पापीजन, व्यापारी एवम् नीचसँग शत्रुता गर्ने हुनसक्छ ।अङ्क ४ भए सन्तान या अरूका लागि ठूलो मान्छेसँग शत्रुता गर्ने अङ्क ५ भए पुत्र-बन्धुसँग शत्रुता गर्ने, परस्त्रीको कारण सम्पत्ति नाश गर्ने हुनसक्छ ।अङ्क ६ भए शत्रु नहुने तर दुराचारका कारण सम्पत्ति नासिने हुनसक्छ ।अङ्क ७ भए बन्धुवर्गादिको विरोधी तर धार्मिक स्वभावको हुनसक्छ ।अक ८ भए विषादि, पशु, कुरौटे एवम् चोरबाट भय, प्रतिष्ठित एवम् विलासी व्यक्तिसँग शत्रुता हुने हुनसक्छ ।अङ्क ९ भए जातक शस्त्रधारी, रोगी एवम् पुण्यकर्मीसँग द्वेष गर्नेवाला हुनसक्छ ।अङ्क १० भए परिवारका लागि बन्धुवर्गसँग र साधुसेवाका लागि परिवारसँग पनि विरोधी हुनसक्ने स्वभावको हुनसक्छ ।अङ्क ११ भए पानी, जलचर अथवा शासकबाट भय हुनसक्छ, ऊ ठूलाको विरोध गर्ने स्वभावको पनि हुनसक्छ ।अङ्क १२ भए आफ्नो निजी स्वार्थका लागि परिजनसँग पनि शत्रुतागर्नसक्ने स्वभावको हुनसक्छ ।

# सातौं भाव

कुण्डलीमा सातौं भावलाई पति-पत्नीभाव, विवाहभाव, दाम्पत्य जीवनभाव आदि पनि भनिन्छ । यहाँ भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टि आदिलाई केलाएर जातकको विवाह, दाम्पत्य जीवन,जातक भए उसकी स्त्रीको र स्त्री जातक भए उसको पुरुषको स्वभाव आदिको विचार गरिन्छ ।पुरुषकुण्डलीको सातौं भावमा अङ्क १ भए जातकको स्त्री / पुरुषको सामाजिक स्वभाव कमजोर हुन्छ ।अङ्क २ भए जातकको स्त्री / पुरुष शीलवती / शीलवान् हुन्छन् ।अङ्क ३ भए जातकको स्त्री / पुरुष शील-गुण-रूप-धनबाटप्रसन्नमना हुन्छे/हुन्छ, तर ऊ एकाकीपनाको पनि हुनसक्छे / हुनसक्छ ।अङ्क ४ भए जातकका स्त्री / पुरुषको गुण ३ को जस्तै हो, तर ऊ बाहिरका मान्छेसँग झगडा गर्न डराउछे / डराउँछ ।अङ्क ५ भए जातकको स्त्री / पुरुषको स्वभाव राम्रो हुँदैन ।अङ्क ६ भए जातकको स्त्री / पुरुष शीलयुक्त, कन्या सन्तानवाला हुनसक्छन् ।अङ्क ७ भए जातकको स्त्री/पुरुष गुणयुक्ता तर अधिक पनि हुनसक्ने हुन्छ ।अङ्क ८ भए जातकको स्त्री / पुरुष कलायुक्त, शिक्षित तर कृपण,विनयरहिता तथा दुर्भाग्य दोषयुक्त पनि हुनसक्छन्।अङ्क ९ अथवा १० भए जातकको स्त्री / पुरुष नराम्रो अथवा एकोहोरो स्वभावका हुनसक्छन् ।अङ्क ११ भए जातकको स्त्री / पुरुष दुष्ट स्वभावका भए पनि सत्य र धर्म भने पालन गर्ने हुनसक्छन् ।अङ्क १२ भए जातकको स्त्री / पुरुष विकारयुक्त, आफूभन्दा भिन्न मत राख्ने, कुत्सित सन्तानवाला, धर्मप्रेमी तर विनयहीन, धनमात्रै खोज्ने खालका हुनसक्छे / हुनसक्छ ।

# आठौं भाव

कुण्डलीमा आठौँ भावलाई मृत्युभाव, भयभाव, दुःखभाव आदि कयौं नाम दिइएको छ । यहाँ भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टि आदिलाई केलाएर जातकले आफ्नो जीवनमा के-कस्ताकुराबाट भय बेहोर्नुपर्ला भनेर विचार गरिन्छ ।छैटौं भावमा बसेको राशि र ग्रहका बारे जे भनियो आठौं भावमा भएका राशि र ग्रहको बारे विचार्दा पनि सोही अवगुण जान्नू ।कुण्डलीको आठौं भावमा अङ्क १ भए जातक रोगी, परदेशी,बितेको कुरामा चिन्ता गर्ने, धनवान् भए पनि दुःखी हुनसक्छ ।अङ्क २ भए कफविकार, अजीर्ण, चौपाया या दुष्टबाट मृत्युभय हुनसक्छ ।अङ्क ३ भए शत्रुको सङ्गबाट अथवा अधिक रसपदार्थ सेवनको कारण गुदा या प्रमेहको रोगले मृत्युभय हुनसक्छ ।अङ्क ४ भए पानी, कीरा या देशान्तरमा अरू मान्छेबाट मृत्युभय हुनसक्छ ।अङ्क ५ भए बिखालु जन्तु चोर अथवा चतुष्पदबाट मृत्युभय हुनसक्छ ।हितकारी कुरा नमान्नाले अङ्क ६ भए अधिक भोगको कारण,स्त्रीहत्या गर्नाले, विषसेवनले या स्त्रीको कारण मृत्युभय हुनसक्छ ।अङ्क ७ भए सन्ताप, शत्रुको रिस, मनुष्य, अधिक उपवास आदिको कारण मृत्युभय हुनसक्छ ।अङ्क ८ भए रक्तविकार, कीरा, विष आदिद्वारा मृत्युभय हुनसक्छ ।अङ्क ९ भए शस्त्रद्वारा, गुप्तेन्द्रियको रोग, चतुष्पद या जलबाट मृत्युभय हुनसक्छ ।अङ्क १० भए जातक कलाप्रेमी, विद्वान् हुनसक्छ ।अङ्क ११ भए अग्निद्वारा सम्पत्ति नाश हुने, अनेक रोगका कारण मृत्युभय हुन्छ ।अङ्क १२ भए अतिसार, पित्तज्वर, रक्तविकार, जल या शस्त्रद्वारा मृत्युभय हुनसक्छ ।

# नवाँ भाव

कुण्डलीमा नवौं भावलाई भाग्यभाव पनि भनिन्छ । यहाँ भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टि आदिलाई केलाएर जातकले आफ्नो जीवनमा के- कसरी भाग्यको उन्नति गर्ला या नगर्ला,जातकले धर्म, यश पालन गर्ला या नगर्ला, जातकको स्वभाव कस्तो होला,• जस्ता कैयौं कुराको चिन्तन गरिन्छ ।कुण्डलीको नवौं भावमा अङ्क १ भए जातकले पशुसम्बन्धी कार्यबाट फाइदा गर्ने हुनसक्छ ।अङ्क २ भए जातक उपार्जित धनद्वारा दान-मान-भोग आदि सबै कुराबाट सुखी हुनसक्छ ।अङ्क ३ भए जातक शीलवान् एवम् धर्मात्मा स्वभावको हुनसक्छ ।अङ्क ४ भए जातक अति धर्मात्मा स्वभावको हुनसक्छ ।अङ्क ५ भए जातक धर्म त्याग्ने, विनयहीन, व्यर्थमा घुम्ने हुनसक्छ ।अङ्क ६ भए जातक स्त्री / पुरुषधर्मी, भक्तिहीन, पाखण्डमतको प्रचारक हुनसक्छ ।अङ्क ७ भए जातक धर्मात्मा स्वभावको हुनसक्छ ।अक ८ भए जातक धर्मत्यागी अथवा अन्त्यमा क्लेश दिने अन्यधर्मको पालन गर्ने हुनसक्छ ।अङ्क ९ भए जातक कर्म गर्दा पनि धर्म सम्झने स्वभावको हुनसक्छ ।अक १० भए नबुझेर अथवा किञ्चित स्वार्थका लागि अर्काकोधर्ममा जाने तर पछि ज्ञान जागेपछि फर्केर स्वधर्मको पूर्ण पालन गर्ने हुनसक्छ ।अङ्क ११ भए जातक धर्मात्मा, कर्म गर्दा पनि धर्मको ख्याल गर्ने स्वभावको हुनसक्छ ।अङ्क १२ भए जातक धर्मपूर्वक कर्म गर्नेवाला हुनसक्छ ।

# दसौं भाव

कुण्डलीमा दसौं भावलाई कर्मभाव पनि भनिन्छ । यहाँ भएका राशि राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टि आदिलाई केलाएरजातकले आफ्नो जीवनमा के-कस्ता कर्म गर्ला या जातकको स्वभाव कस्तो होला जस्ता कैयौं कुराको चिन्तन गरिन्छ ।कुण्डलीको दसौं भावमा अङ्क १ भए जातक विनयहीन, कुरौटेतथा सज्जनलाई पनि निन्दनीय कर्म गराउन खोज्ने स्वभावको हुनसक्छ ।अङ्क २ भए जातक सज्जन स्वभावको हुनसक्छ ।अङ्क ३ भए जातक सज्जन, प्रीतिकारक कर्म गर्ने गराउने,कृषिसँग सम्बन्धित कर्म गर्नेवाला हुनसक्छ ।अङ्क ४ भए जातक उपकारी, पापनाशक कार्य गर्नेवाला हुनसक्छ ।अङ्क ५ भए जातक अधार्मिक स्वभावको हुनसक्छ ।अङ्क ६ भए जातक मूर्ख स्वभावको हुनसक्छ ।अङ्क ७ भए जातक सज्जन स्वभावको, सबैको प्रिय व्यापारद्वाराधन वृद्धि गर्नेवाला हुनसक्छ ।अक ८ भए जातक धार्मिक स्वभाव भए पनि निर्दयी एवम् अनीतियुक्त कर्म गर्नेवाला हुनसक्छ ।अङ्क ९ भए जातक कार्यदक्षी, नित्य लाभ गर्ने, यशयुक्त एवम् परोपकारी हुनसक्छ ।अङ्क १० भए जातक प्रतापी, कार्यमा तत्पर, बन्धुयुक्त तर दया र धर्महीन, दुष्टहरूको मात्रै प्रिय हुनसक्छ ।अक ११ भए जातक चतुर, ठग, पाखण्डी, लोभको कारण विश्वासहीन तथा समाजविरोधी कार्य गर्ने हुनसक्छ ।अक १२ भए जातक समाजमा मानयुक्त भएर बस्ने हुनसक्छ ।

# एघारौं भाव

कुण्डलीमा एघारौ भावलाई आयभाव पनि भनिन्छ । यहाँ भएका राशि,राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टि आदिलाई केलाएर जातकले आफ्नो जीवनमा के-कसरी आम्दानी गर्ला या नगर्ला आदिको विचार गरिन्छ ।कुण्डलीको एघारौं भावमा अङ्क १ छ भने जातकले पशु, राजा एवम् देशान्तरबाट लाभ गर्नसक्छ ।अङ्क २ छ भने जातकले स्त्री, साधु या गौ (पशु) पालनद्वारा विशेष धनलाभ गर्नसक्छ ।अङ्क ३ भए जातकले कुनै पनि कार्यबाट लाभ गर्ने र ऊ धार्मिक स्वभावको हुनसक्छ ।अङ्क ४ भए जातकले नोकरी, खेती, शास्त्र एवम् साधुजनबाट धनलाभ गर्नसक्छ ।अङ्क ५ भए जातकले निन्द्यकर्म, हिंसा, व्यायाम तथा देशान्तरबाट धनलाभ गर्नसक्छ ।अङ्क ६ भए जातकले शास्त्र - पुराणादिको विनय - विवेकको पालन आदिबाट अनेक तरहले लाभ गर्नसक्छ ।अङ्क ७ भए जातक व्यापारबाट धनलाभ गर्ने, सज्जन स्वभावको यशवान् हुनसक्छ ।अङ्क ८ भए जातकले कपटपूर्वक धनलाभ गर्ने हुनसक्छ ।अङ्क ९ भए जातकले राजसेवा, सज्जन सेवा तथा पुरुषार्थद्वारा धनलाभ गर्नसक्छ ।अङ्क १० भए जातकले पानीसम्बन्धी व्यापार, विदेश यात्रा, राजसेवाआदिबाट धनलाभ गर्ने तथा गरेको लाभलाई खर्च पनि गर्ने हुनसक्छ ।कुत्सितकर्म,अङ्क ११ भए जातकले कुत्सित कर्म, त्याग, धैर्य,विवाट लाभ गर्नसक्छ ।पराक्रम अङ्क १२ भए जातकले आदर र विनयपूर्वक धनलाभ गर्नसक्छ ।

## बाह्रौं भाव

कुण्डलीमा बाह्रौं भावलाई व्ययभाव पनि भनिन्छ । यहाँ भएका राशि, राशिस्वामीको अवस्था, ग्रह तथा ग्रहको दृष्टि आदिलाई केलाएर जातकले आफ्नो जीवनमा के-कस्ता कुरामा खर्च गर्ला या गर्नुपर्ला भनेर विचार गरिन्छ ।बाह्रौं भावमा अङ्क १ भए जातक उत्तम वस्त्रादिको सुखका लागि तथा पशुपालनादि कर्मका लागि उपार्जित धन खर्च गर्ने स्वभावको हुनसक्छ ।अङ्क २ भए जातक नाना वस्त्र एवम् स्त्रीका लागि धन खर्च गर्ने स्वभावको हुनसक्छ ।अङ्क ३ भए जातक स्त्री, सेवक तथा दुष्टको सङ्गतको कारण धनको अपव्यय गर्ने स्वभावको हुनसक्छ ।अङ्क ४ भए जातक धर्मकार्यमा खर्च गर्ने स्वभावको हुनसक्छ ।अङ्क ५ भए जातकको धन उग्र एवम् निन्दनीय कार्यको कारण नाश हुनसक्छ ।अदक ६ भए जातक स्त्री, मङ्गलकार्य एवम् साधुसङ्गतिका लागि |खर्च गर्ने स्वभावको हुनसक्छ ।अङ्क ७ भए जातक धर्मकार्य, मङ्गलकार्य आदिमा सर्च गर्ने स्वभावको हुनसक्छ ।अङ्क भए जातक लोक-निन्द्य कार्यमा खर्च गर्ने स्वभावको हुनसक्छ ।अङ्क ९ भए जातक पापसङ्गति, अकांको खुसामद, कृषिकर्म तथा अर्काको अधीनमा रहनाले खर्च गर्नुपर्ने बाध्यतामा पुग्नसक्छ अङ्क ९ भए जातक पापसङ्गति, अर्काको खुसामद, कृषिकर्म तथाअर्काको अधीनमा रहनाले खर्च गर्नुपर्ने बाध्यतामा पुग्नसक्छ ।अङ्क १० भए जातक निन्द्य वस्तु भोजनका लागि खर्च गर्नेवाला,आफ्नो वर्गको सत्कार गर्ने, खेती पनि गर्नसक्ने, धनहीन एवम् लोकनिन्दित कर्म गर्नेवाला हुनसक्छ ।अङ्क ११ भए जातक धर्मकार्यमा व्यय गर्ने हुनसक्छ ।अङ्क १२ भए जातक नौका आदि बनाउनमा, विवादमा तथा विदेशयात्रामा खर्च गर्ने हुनसक्छ ।

# लग्नकुण्डली ग्रहभाव फल कथन

यस प्रकरणमा कुन ग्रहले कुन भावमा बस्ता कस्तो फल दिन्छ, त्यसबारे विचार गरिन्छ । ज्योतिषले भाव, भावमा बसेको राशि, राशिस्वामीको अवस्था, ग्रहको स्थिति, शत्रु-मित्रको दृष्टि तथा जातकको दशा-अन्तर्दशा आदिको पनि विचार गरेर फलादेश गर्नुपर्छ । ती सबै कुरा जान्ने उपाय भनेकै पुस्तकको पटक-पटकको अध्ययन हो।

## प्रथम भाव ग्रहफल कथन

क्रूराश्चतुर्षु केन्द्रेषु तथा क्रूरा धनेपि च ।

दरिद्रयोग जानीयात् स्वपक्षस्य भवङ्करः ।।

अर्थ- लग्नसहित केन्द्रमा तथा दोस्रो भावमा पनि क्रूर ग्रह भए त्यसले जातकलाई दरिद्र बनाउँछ, तर शुभ ग्रह हुँदा धन-धान्यको वृद्धि हुन्छ ।

प्रथम भावमा सूर्य भए जातक बाल्यावस्थामा रोगी, नेत्रसम्बन्धी रोग, नीचको सेवक, गृहसुखहीन, प्रारब्धवादी, विकल शरीर तथा सन्तानहीन हुनसक्छ ।प्रथम भावमा चन्द्र भए बहुधनभोगी, बलवान, सुन्दर देहवाला हुनसक्छ ।तर नीच या पापयुक्त छ भने जातक निर्बुद्धि, दुःखी तथा धनहीन हुनसक्छ ।प्रथम भावमा मङ्गल भए बाल्यावस्थामा पेट एवम् दाँतको रोगी, चुक्लीबाज, कुशदेह, पापविचारवाला, चञ्चल, नीच सेवक,

- मलिन वस्त्रधारी, सुखहीन हुनसक्छ ।प्रथम भावमा बुध भए सुन्दर रूपवाला, विद्वान्, दानी, थोरै रसिलो तथा पवित्र भोजन गर्नेवाला, सत्यवक्ता, विलासप्रिय, सुखी तथा परदेशी हुनसक्छ तर उसको हृदय भने दुष्ट पनि हुनसक्छ ।प्रथम भावमा बृहस्पति भए नाना प्रकारका वस्त्र, सुवर्ण, रत्न एवम् धनले पूर्ण, सुन्दर स्वरूपवाला, राजा, देव, गुरुको प्रिय हुनसक्छ ।प्रथम भावमा शुक्र भए कार्यमा तत्पर, विद्वान्, उत्तम घरमा बस्ने,कुनै पनि विषयमा कुतूहल नमान्ने तथा प्रारब्धवादी हुनसक्छ ।प्रथम भावमा शनि भए मन्दगति, मद-पीडित, नीच प्रकृति,अल्पकेश तथा दुर्बल शरीरवाला हुनसक्छ शनि आफ्नो शत्रुको राशिमा छ भने जातकलाई थोरै मित्र धेरै शत्रुवाला बनाउँछ ।प्रथम भावमा राहु भए रोगी कुलको मुखिया, व्यर्थ धेरै बोल्ने, लालनेत्र, क्रोधी, कुकर्मी तर साहसी हुनसक्छ ।प्रथम भावमा केतु भए जातक बन्धुवर्गमा क्लेश दिने, दुर्जन पीडित,स्त्री-पुत्रादिको चिन्ता, व्यग्रता तथा वातरोगी हुनसक्छ ।

## द्वितीय भाव ग्रहफल

पापा: सर्वे धनस्थाने धनहानिकरा मताः ।

अन्यैः सौम्यैः शुभ सर्वमृद्धिवृद्धिधनादिकम् ।।

अर्थ-दोस्रो भावमा बसेका सबै पाप ग्रहले मान्छेलाई दरिद्र र शुभ ग्रहले धन-धान्यको वृद्धि गराउँछ ।दोस्रो भावमा सूर्य भए जातक स्त्री एवम् सन्तानसुख वर्जित,कृशशरीर, दीन, लाल नेत्र, खराबकेश, गृहसुखहीन हुनसक्छ । तर जातकले फलाम एवम् तामाको व्यापारबाट प्रशस्त आयआर्जन गर्न सक्छ ।दोस्रो भावमा चन्द्रमा भए दानी, बुद्धिमान, धनले परिपूर्ण, चञ्चल,दुष्ट-स्वभाव, दुःखी, यशस्वी, क्षमाशील, स्त्रीविलासी तथा सुन्दर हुनसक्छ ।दोस्रो भावमा मङ्गल भए धातुवादी, विदेशवासी, ऋण गर्नेप्रवृत्तिवाला, व्यसनी, क्षमाशील, खेती गर्न कुशल, पराक्रमी, कृशदेह एवम् सुखी हुनसक्छ ।दोस्रो भावमा बुध भए पिताभक्त, स्थिर, पाप गर्न डराउने, गौरवर्ण,सत्यवादी, बिहारप्रिय, सुखी एवम् परदेशवासी हुनसक्छ ।दोस्रो भावमा बृहस्पति भए प्रसन्न चित्त, उत्तम स्त्री पुरुषको पति-पत्नी, मानी तथा मोतीको व्यापारले धन कमाउने हुनसक्छ ।दोस्रो भावमा शुक्र भए अर्काको धनले धनवान्, स्त्रीहरूलाई धनदिने, चाँदी, सीसा आदिको व्यापारबाट धन कमाउने,

दोस्रो भावमा बृहस्पति भए प्रसन्न चित्त, उत्तम स्त्री पुरुषको पति-पत्नी, मानी तथा मोतीको व्यापारले धन कमाउने हुनसक्छ ।दोस्रो भावमा शुक्र भए अर्काको धनले धनवान्, स्त्रीहरूलाई धनदिने, चाँदी, सीसा आदिको व्यापारबाट धन कमाउने, केटाकेटीपनवाला, दुर्बलदेह, प्रियवक्ता तथा थुप्रैलाई पाल्नेवाला हुनसक्छ ।दोस्रो भावमा शनि भए सहनशील, धनवान्, चञ्चलनेत्र, शीघ्रगामी तथा छलकर्ममा तत्पर रहनेवाला हुनसक्छ ।दोस्रो भावमा राहु भए जातक छलकर्मी, अभिमानी,दुःखमा मत्स्य- मांसबाट धनोपार्जन गर्ने तथा नीचसँग आश्रित भएर रहनेवाल हुनसक्छ । दोस्रो भावमा केतु भए जातक व्यग्रतारहित, अविचारद्वारा धननार मुखरोगी, कुटुम्बविरोधी हुनसक्छन्, तर केतु आफ्नो घरमा छ भने वचनद्वारा सत्कार पाउनेवाला र शुभ ग्रहको राशिमा छ भने अत्यन्त हुनसक्छन् ।

## तृतीय भाव ग्रहफल

पापैस्तृतीयगैः सर्वैबान्धवै रहितो भवेत् ।

सौम्येश्च भ्रातृसंयुक्तः कीर्तियुक्तो धनप्रियः ।।

अर्थ- तृतीय स्थानमा सबै पाप ग्रह भए जातकलाई भाइ हीन गराउँछ'शुभ ग्रह भए जातक भाइ, कीर्ति तथा धनयुक्त हुन्छ ।तेस्रो भावमा सूर्य छ भने जातक सहोदरहीन, मित्रहितकारी स्त्रीपुत्रादियुक्त, धनी, धैर्यवान्, क्षमाशील एवम् स्वीप्रिय हुन सक्छ ।तेस्रो भावमा चन्द्रमा छ र त्यो चन्द्रमा पापग्रहको राशिमा छ कम बोल्ने तथा दाजुभाइसँग शत्रुता गर्ने हुनसक्छ, चन्द्रमा शुभराशिमा छ भने सुखी, धनयुक्त, काव्यशास्त्रको ज्ञाता हुनसक्छ ।तेस्रो भावमा मङ्गल छ भने सहोदरहीन, कृशदेह, सुखभागी हुन्छ। मङ्गल उच्चको भए विलास गर्नेवाला र नीच या शत्रुघरको भए जनसुखहीन, सबै कुरा हुँदाहुँदै पनि कुत्सित घरमा रहनेवाला हुनसक्छ ।तेस्रो भावमा बुध छ भने साहसी परिवार युक्त, अशुद्ध हृदयवा सुखहीन तर कुशलतापूर्वक आफ्नो अभीष्ट पूरा गर्नेवाला हुनसक्छ ।तेस्रो भावमा बृहस्पति छ भने जातक बन्धुहरूको उपकारार्थ धनोपार्जन गर्ने, अनुचित कार्यमा धन खर्च नगर्ने, आम्दानी र खर्च बराबरी गर्ने हुनसक्छ ।तेस्रो भावमा शुक्र छ भने जातक मावली सन्तानलाई माया गर्ने,नेत्ररोगी, धनवान्, मधुरबक्ता एवम् स्वच्छ वस्त्रधारी हुनसक्छन् ।तेस्रो भावमा शनि छ भने सहोदरहीन, राजासमान सुखी एवम् सि्सुखले पूर्ण हुनसक्छन् ।तेस्रो भावमा राहु छ भने भाइलाई अनिष्ट, तर पुत्र स्त्री मित्रादिकोसुखभोगी, उच्चको राहु भए सवारी साधनसम्पन्न सुखी हुनसक्छन् ।तस्रो भावमा केतु भए जातक केही विवादी, शत्रुनाशक, धनलाभी,भोग, ऐश्वर्य एवम् प्रतापको वृद्धि गर्ने तर मित्रलाई हानि, हातमा पीडा, भयया उद्वेग पनि दिनसक्छ ।

# चतुर्थ भाव ग्रहफल

तुर्यस्थाने स्थिताः पापा बालत्वे मातृकष्टदाः ।

सौख्यं सौम्याः प्रकुर्वन्ति राजसम्मानदायकाः ।

अर्थ- चारौं स्थानमा पाप ग्रह भए बाल्यावस्थामा मातालाई कष्ट हुन्छ, शुभ ग्रह भए सुख एवम् राज्य सम्मान प्राप्त हुन्छ ।चौथो भावमा सूर्य भए जातक सबैसँग मिल्ने, कोमल, सङ्गीतज्ञ, रणविजयी, धन-स्त्रीसुखसहित राजप्रिय हुनसक्छ ।चौथो भावमा चन्द्रमा भए जातक धनधान्ययुक्त, परिजनहितकारी स्त्री-पुरुषलाई प्रसन्न पार्नसक्ने, रोगी, मत्स्य-मांसभोगी, सवारी रहने धार बस्ने हुनसक्छ । चौथो भावमा मङ्गल भए जातक बुद्धिहीन, दीन, नीचसंग बन्धुरहित, विदेश घुम्नेवाला, नीचको सेवक, अर्काको अधीन एवम् परस्त्रीमा मन दिने हुनसक्छ ।चौथो भावमा बुध पापभावमा भए धेरै धनयुक्त तर बन्धुहीन बनाउँछ । उच्चको या आफ्नो घरको भए थुप्रै स्त्रीपुरुषवाला, चञ्चलबुद्धि निर्लज्ज, कृश जाँघवाला, दुर्बलदेह, बाल्यावस्थामा रोगी हुनसक्छ ।चौथो भावमा बृहस्पति भए लोकमान्य, धन, वाहन आदिले सम्पन्न, सदा प्रसन्न, अर्काको अनुग्रहले धनलाभ गर्ने तथा हीरा जवाहरतवाला हुनसक्छ ।चौथो भावमा शुक्र भए बहुस्त्री - सन्तानयुक्त, शोभायुक्त, सुन्दर महलमा बस्ने, अन्नपात, वस्त्र आदिको विलासले सम्पन्न हुनसक्छ ।चौथो भावमा शनि छ भने बन्धु, स्त्री, पुत्र, सेवक आदिको सुखबाटरहित, रोगी हुनसक्छ । यदि शनि वक्र छ भने जातकलाई अर्काको गाँउमा पुऱ्याएर दुःखी गराउँछ ।चौथो भावमा राहु भए जातक धन-बन्धुहीन, गाउँ वा नगरको छेउमा रहनेवाला, नीचको साथी, चुक्लीबाज, पाप-विचार,दुर्बल स्त्रीवाला हुनसक्छ ।एकपुत्र तथा चौथो भावमा केतु भए जातक माता-पिता तथा मित्रबाट सुख नपाउने, पैतृक सम्पत्तिको नाश हुने हुनसक्छ । स्वगृही अथवा उच्चको केतु भए बन्धुजनबाट सुख हुन्छ तर धेरै समय व्यग्रतासहित घरबाहिर रहनसक्छ ।

# पञ्चम भाव ग्रहफल

पञ्चमस्थाः शुभाः 'सर्वा पुत्रसन्तानकारकाः ।

क्रूराः सन्ततिमृत्युं च कुपुत्रं च धरासुतः । ।

अर्थ- पाँचौं भावमा बसेका सबै शुभ ग्रहले सन्तान दिन्छन्, तर सबै पाप ग्रह पाँचौं भावमा बसेको भए तिनीहरूले सन्तान हानि गर्दछन् । अशुभयुक्त या दृष्ट मङ्गल पाँचौं भावमा भए जातकलाई कुपुत्र बनाउँछ ।पाँचौं भावमा सूर्य भए जातक बाल्यावस्थामा दुःखी, युवावस्थामाअधनी, रोगयुक्त, एकपुत्रवाला, परघरवासी, कुर, चञ्चल, नीचकर्म गर्नेवाला तथा दुष्ट हृदय भएको हुनसक्छ ।पाँचौं भावमा पूर्ण चन्द्रमा भए जातक समस्त सुख प्राप्त गर्ने,सज्जन पति-पत्नीयुक्त हुनसक्छ, तर क्षीण चन्द्रमा भए जातक स्त्री - पौत्रादितथा अन्य पनि कुराले सुखहीन हुनसक्छ ।पाँचौं भावमा मङ्गल भए जातक सन्तानहीन, पापविचारी, दुःखीहुनसक्छ, तर मङ्गल आफ्नो घरको या उच्च भए जातकको शरीर दुर्बलएवम् कुरूप भए पनि सन्तानको सुख भने हुनसक्छ ।पाँचौं भावमा बुध भए स्त्री- पुत्रादियुक्त, सुखभागी, सुन्दरमुख, देव,गुरु, ब्राह्मणभक्त एवम् पवित्र हृदयवाला हुनसक्छ ।पाँचौं भावमा बृहस्पति भए सहृदयी, मित्रबाट सम्मान पाउने,'शास्त्रज्ञाता, सुखी, लोकप्रिय एवम् स्वरूपवान् हुनसक्छ ।पाँचौं भावमा शुक्र भए जातक धेरै सन्तानवाला, बुद्धिमान्,धनवान्, गुणवान्, सुन्दर नेत्र तथा चतुर स्त्री-पुरुषका पति-पत्नी हुन्छन् ।पाँचौं भावमा शत्रुको घरमा शनि भए जातक पुत्रहीन, धनहीन र दुःखी हुनसक्छ, तर उच्च या स्व-मित्रगृहको भए एक पुत्रवाला हुनसक्नपाँचौं भावमा राहु भए एकपुत्रवाला, मलिनचेष्टी हुनसक्छन चन्द्रमा पनि सँगै भए त्यसले जातकलाई पुत्रनाशक एवम् क्रोधी बनाउँछ।पाँचौं भावमा केतु भए जातक सहोदरलाई चोट दिने, वातरेहुनसक्छ । शुभयुक्त केतु भए जातक बुद्धिप्रति सचेत, स्वल्प पुत्रवाला, संशएवम् अनेक बलले युक्त हुनसक्छ ।पञ्चम भाव ग्रहफल

पञ्चमस्थाः शुभाः 'सर्वा पुत्रसन्तानकारकाः ।

क्रूराः सन्ततिमृत्युं च कुपुत्रं च धरासुतः । ।

अर्थ- पाँचौं भावमा बसेका सबै शुभ ग्रहले सन्तान दिन्छन्, तर सबै पापग्रह पाँचौं भावमा बसेको भए तिनीहरूले सन्तान हानि गर्दछन् । अशुभयुक्त या दृष्ट मङ्गल पाँचौं भावमा भए जातकलाई कुपुत्र बनाउँछ ।पाँचौं भावमा सूर्य भए जातक बाल्यावस्थामा दुःखी, युवावस्थामाअधनी, रोगयुक्त, एकपुत्रवाला, परघरवासी, कुर, चञ्चल, नीचकर्म गर्नेवाला तथा दुष्ट हृदय भएको हुनसक्छ ।पाँचौं भावमा पूर्ण चन्द्रमा भए जातक समस्त सुख प्राप्त गर्ने,सज्जन पति-पत्नीयुक्त हुनसक्छ, तर क्षीण चन्द्रमा भए जातक स्त्री - पौत्रादितथा अन्य पनि कुराले सुखहीन हुनसक्छ ।पाँचौं भावमा मङ्गल भए जातक सन्तानहीन, पापविचारी, दुःखीहुनसक्छ, तर मङ्गल आफ्नो घरको या उच्च भए जातकको शरीर दुर्बलएवम् कुरूप भए पनि सन्तानको सुख भने हुनसक्छ ।पाँचौं भावमा बुध भए स्त्री- पुत्रादियुक्त, सुखभागी, सुन्दरमुख, देव, गुरु, ब्राह्मणभक्त एवम् पवित्र हृदयवाला हुनसक्छ ।पाँचौं भावमा बृहस्पति भए सहृदयी, मित्रबाट सम्मान पाउने,'शास्त्रज्ञाता, सुखी, लोकप्रिय एवम् स्वरूपवान् हुनसक्छ ।पाँचौं भावमा शुक्र भए जातक धेरै सन्तानवाला, बुद्धिमान्,धनवान्, गुणवान्, सुन्दर नेत्र तथा चतुर स्त्री-पुरुषका पति-पत्नी हुन्छन् ।पाँचौं भावमा शत्रुको घरमा शनि भए जातक पुत्रहीन, धनहीन र दुःखी हुनसक्छ, तर उच्च या स्व-मित्रगृहको भए एक पुत्रवाला हुनसक्नपाँचौं भावमा राहु भए एकपुत्रवाला, मलिनचेष्टी हुनसक्छन चन्द्रमा पनि सँगै भए त्यसले जातकलाई पुत्रनाशक एवम् क्रोधी बनाउँछ।पाँचौं भावमा केतु भए जातक सहोदरलाई चोट दिने, वातरे हुनसक्छ । शुभयुक्त केतु भए जातक बुद्धिप्रति सचेत, स्वल्प पुत्रवाला, संश एवम् अनेक बलले युक्त हुनसक्छ ।

## षष्ठ भाव ग्रहफल

षष्ठे क्रूरा नरं कुर्युः शत्रुपक्षविवर्जितम् ।

सौम्याः षष्ठे महारोगान् षष्ठश्चन्द्रश्च मृत्युदः ।।

अर्थ- छैटौं घरमा पाप ग्रह भए शत्रु एवम् रोगक नाश, शुभ ग्रह भए रोग बढाउने हुन्छ । छैटौँ घरको चन्द्रमालाई मृत्यु कारक मानिन्छ ।छैटौं भावमा सूर्य भए जातक योगी, सुबुद्धि, परिवारपोषक ज्ञानवान्, कृशदेह, गृहसुखयुक्त, उत्तमरूप, विलासी, शत्रुलाई परास्त गर्ने सत्कर्मद्वारा लोकपूज्य एवम् दृढदेहवाला हुनसक्छ ।छैटौं भावमा क्षीण चन्द्रमा छ भने सुखवर्जित, रोगी हुन्छ । तरआफ्नो घर या उच्चको अथवा पूर्ण छ भने जातक धेरै सुखी हुनसक्छ ।छैटौं भावमा मङ्गल छ भने झमेला भय, उच्चको भए धन पुत्रादिले युक्त एवम् सुखी, नीच अथवा शत्रुगृही, दृष्ट भए रोगयुक्त एवम् निन्द्यकर्म गर्नेवाला हुनसक्छन् ।छैटौं भावमा वक्र अवस्थाको बुध भए शत्रुभय, शुभ ग्रहको राशिमाशुभ ग्रहद्वारा हेरिएको भए शत्रुलाई जित्ने हुनसक्छन् ।छैटौं भावमा बृहस्पति भए कुशशरीरवाला, शत्रुलाई परास्त गर्ने,शत्रुगृह या वक्रको भए शत्रुको भय हुनसक्छ ।छैठौं भावको शुक्र सदा शुभप्रद हुन्छन् । शत्रुको राशिमा अस्त भए जातक चतुर, चमत्कारी, विद्वान् हुन्छन्, उच्च या शुभराशि, शुभ ग्रहयुक्तभए शत्रुलाई परास्त गर्नेवाला हुनसक्छन् ।छैटौं भावमा शनि नीच या शत्रुको घरमा, अथवा शत्रुसँग भए कुलनाशक हुनसक्छ । भिन्न स्थानमा छैटौं भावको शनि भए शत्रुको नाश तथा उच्चको भए मनोरथपूर्ण गर्नेवाला हुन्छन् ।छैठौं भावमा राहु भए शत्रुको नाश, पुत्र, धन, सुख आदिको प्राप्ति ।उच्चको राहु भए सबै अनर्थको नाश, तर परस्त्रीमा प्रेम गर्नेवाला बनाउँछ ।छैटौं भावमा केतु भए जातकको मावलीद्वारा अनादर, शत्रुनाश,स्वल्पधनवाला तथा निरोगी हुनसक्छन् ।चौपाया सुख,

# सप्तम भाव ग्रहफल

कुभार्या सप्तमे पापाः सौम्याः सर्वजनप्रियम् ।

गुरु-शुक्रौ शचीतुल्यां रूपलावण्यशालिनीम् ।।

अर्थ- सातौं भावमा पाप ग्रह भए जातककी स्त्री कुचरित्र एवम् शीलरहित हुन्छे । शुभ ग्रह भए गुणयुक्त, हितकारी हुन्छे। सातौं भावमा गुरु-शुक्रको योग भए जातककी पत्नी इन्द्राणी तुल्य धनवती एवम् सुन्दरी हुन्छे ।सातौं भावमा सूर्य भए जातक स्त्री - विलासी तर अन्य सुखबाट रहित, चञ्चल, पापविचारी, मध्यमदेह, कपिलनेत्र, पिङ्गलवर्ण केश एवम् कुरूप गराउँछ ।सातौं भावमा पूर्णचन्द्रमा भए सुन्दर स्त्री// पुरुषका पति/ पत्नी,सुवर्णादि धनयुक्त, सुन्दर शरीरवाला हुन्छन् । चन्द्रमा क्षीण अथवा पापराशिमा पापदृष्ट भए सुखहीन एवम् रोगीका पति/पत्नी हुनसक्छन् ।सातौं भावमा नीच अथवा शत्रुराशिको मङ्गल भए जातकले स्त्री / पुरुष रोगी भएको कारण अथवा मरणको कारण दु:खी हुनुपर्ने हुनसक्छ । मङ्गल मकर, मेष या वृश्चिक राशिमा छ भने जातक चञ्चल, स्थूल शरीरवाला, दुष्ट स्वभाव, कुरूप एवम् परस्त्रीसँग प्रेम गर्नेवाला हुनसक्छ ।सातौं भावमा बुध छ भने चञ्चल स्वभाव, मध्यमदृष्टि, शुभराशिमा छ भने उत्तम कुलोत्पन्न स्त्री-पुरुषको पति-पत्नी हुनसक्छन् ।सातौं भावमा बृहस्पति छ भने राजासमान सुख भोक्ता, प्रियवक्ता, बुद्धिमान्, सुन्दर शरीर एवम् दर्शनीय व्यक्ति हुनसक्छन् । सातौं भावमा शुक्र छ भने थुप्रै पुत्र एवम् जनवाला, उत्तम कुलोत्पन्नसँग विवाह, सुन्दर शरीर, प्रसन्न एवम् सुखयुक्त हुनसक्छन् ।सप्तम भावमा शनि छ भने प्रथम स्त्री रोगी अथवा मृत्युको कारणदु:खी, दोस्री स्त्री रोगिणी अथवा अङ्गहीना हुनसक्छे । जातकले धननाश अथवा रोगको कारण दुःखी हुनुपर्ने हुनसक्छ ।'खर्च सप्तम भावमा राहु छ भने जातकको स्त्री / पुरुष अधिक धन गर्ने स्वभावका नाना भोगलाभ गर्ने, अनेक ग्रहयुक्त राहु छ भने जीवनसाथी पापविचारी, कुटिल एवम् दुष्ट स्वभाववाला हुनसक्छन् ।सप्तम भावमा केतु भए जातकलाई हिँडिरहनुपर्ने चिन्ता, धन नाश,`शत्रुभय आदि हुनसक्छ ।

# अष्टम भाव ग्रहफल

**खेटाः सर्वे महादुष्टा अष्टमस्थानमाश्रिताः ।**

**शशाकस्तु विशेषेण जन्मकाले च मृत्युदः ।।**

अर्थ- आठौं भावमा बसेका सबै ग्रहले जातकलाई मृत्युको मुखतिर नै डोयाउँछन्, त्यसमा पनि केही अपवाद छाडेर चन्द्रमा त मृत्यु कारक नै बन्दछ ।अष्टम भावमा सूर्य भए जातक चञ्चल, त्यागी, विद्वान्को आदर गर्ने, रोगपीडित, व्यर्थ बोल्ने, भाग्यहीन, शीलरहित कुवस्त्रधारी, नीचसेवक एवम् परदेशवासी हुनसक्छ ।अष्टम भावमा पापराशिको चन्द्रमा भए मारणकारक हुन्छ ।स्वगृही अथवा शुक्र बुध या गुरुको राशिमा भए श्वास-प्रश्वाससम्बन्धी रोगले दु:खी हुनसक्छ ।आठौं भावमा नीच अथवा शत्रुराशिको घरमा बलहीन मङ्गल छ भने जलमा डुब्ने भय हुन्छ । यदि धनुको निकट वृश्चिक, मकर अथवा मेषसँग भए नीलरङ्गी हातखुट्टावाला तथा सबै प्रकारको सुख भोग्ने हुनसक्छ ।आठौं भावमा शुभ ग्रहको राशिमा बुध भए जातक सत्यवक्ता, अतिथिसेवी तथा शत्रुगृह अथवा पापग्रहले युक्त भए कामवशित भएर पतित हुनसक्छ ।आठौं भावमा बृहस्पति भए चञ्चलचित्त, तीर्थयात्रा गर्ने,धन- स्त्रीरहित, कृशदेह एवम् योग-क्रियामा तत्पर रहने हुनसक्छन् ।आठौं भावमा शुक्र भए धर्मात्मा, राजसेवक, मत्स्यमांसप्रिय,विशाल नेत्र तथा चतुर्थवय उमेरवाला हुनसक्छ ।आठौं भावमा शनि भए नेत्ररोगी, परदेशको कारण दु:खी,चोरदोषभय एवम् नीचसँग भय हुनसक्छ ।आठौं भावमा राहु भए रोगी, पापविचारी, दुर्बल, कायर, धनीमायाजालमा पारङ्गत हुनसक्छन् ।आठौं भावमा केतु भए जातकलाई पाइल्स आदि रोग पीडा, वाहनआदिबाट भय, धनको अप्राप्ति हुनसक्छ । तर केतु वृश्चिक, कन्या, मेष,वृष र मिथुनमा भए धनको लाभ गराउँछ ।

## नवम भाव ग्रहफल

अब्दे द्विद्विमिते खौ च गदितं चन्द्रे चतुर्विंशतौ

ह्यष्टाविंशतिके कुजे च कथितं दन्तैर्मिते चन्द्रजे ।

जीवे षोडशके भृगौ नवयुते सौरे च षट्त्रिंशके

भाग्यस्थे खलु भाग्यवृद्धिरुदिता विज्ञैश्च गर्गादिभिः ।।

अर्थ- नवौँ भाव (भाग्यभाव) मा सूर्य भए २२ वर्षमा, चन्द्रमा भए २४ वर्षमा,मङ्गल भए २८ वर्षमा, बुध भए ३२ वर्षमा, गुरु भए १६ वर्षमा, शुक्र भए २१ वर्षमा जातकको भाग्यको उदय हुन्छ । तर शनि भाग्येश पनि बनेर नवौं भावमा नै बसेको भए जातक जीवनपर्यन्त भाग्यशाली हुन्छ ।नवम भावमा सूर्य भए जातक सत्यवक्ता, सुन्दररूप,परिजनहितकारी, देव-ब्राह्मणभक्त, बाल्यावस्थामा रोगी, युवावस्थामा स्थिर, धनवान्, दीर्घायु एवम् सुरूप हुनसक्छ ।नवम भावमा पूर्ण चन्द्रमा भए सबै सुखयुक्त, स्त्रीहरूको प्रिय, क्षीण अथवा नीचको चन्द्रमा भए धनहीन, धर्मविरोधी, निर्गुण एवम् मूर्ख हुनसक्छ ।नवम भावमा मङ्गल भए रोगी, पिङ्गलवर्ण आँखा, हात,शरीरवाला, बहु परिवारवाला, भाग्यवान्, कुवस्त्रधारी, पुण्यहीन,समानरूप, शीलवान् एवम् विद्यानुरागी हुनसक्छ ।नवम भावमा शुभ राशिको बुध भए धन, स्त्री- पुत्रले युक्त, पापग्रहले युक्त भए कुमार्गगामी तथा वेदशास्त्रनिन्दक हुनसक्छ ।नवम भावमा बृहस्पति भए जनमा श्रेष्ठ, राजातुल्य धनी, पवित्रहृदय, कृपण, सुखी तथा स्त्रीहरूको प्रिय हुनसक्छ ।नवम भावमा शुक्र भए सुन्दर शरीर, सुखी, देवब्राह्मणभक्त, पवित्रहृदय, आफ्नो बलले धन र सुख उपार्जन गर्ने हुनसक्छन् ।नवम भावमा शनि भए जातक दम्भी, धन-धर्महीन, पितालाई धोकादिने, मदमत्त, रोगी, पापविचारी या अन्य पनि जीवनसाथी हुनाले निर्बलहुनसक्छन् ।नवम भावमा राहु भए निन्द्यकर्म गर्ने, चुक्लीबाज, मलिन वस्त्रधारी,कुटुम्बलाई प्रसन्न पार्ने, धनहीन एवम् शत्रुको भयले युक्त हुनसक्छन् ।नवम भावमा केतु भए जातकको कष्टनाश, पुत्रेच्छा, नीचद्वारा भाग्योदय,सहोदरलाई पीडा, बाहुकष्ट, दान एवम् तपस्याका उपहासी हुनसक्छन् ।

## दशम भाव ग्रहफल

दशम भावमा सूर्य भए जातक गुणयुक्त, दानी अति कोमल हृदय, सानोकद, पवित्रता प्रिय, गीत-नृत्यप्रेमी, राजमान्य तथा अन्तिम अवस्थामा रोगी हुनसक्छ ।दशम भावमा चन्द्रमा छ भने सुख एवम् धनले पूर्ण, शत्रु या पापघरमा भए कासरोग पीडित, दुर्बल देह, आमाबाट धन पाउने तर आफू भने कर्महीन हुनसक्छन् ।दशम भावमा मङ्गल भए जितेन्द्रिय, सञ्चयहीन, कुलमा श्रेष्ठ,स्त्रीको प्रिय, दृढ एवम् समान शरीरवाला, खेती गर्ने, क्रोधी, ब्राह्मण गुरुभक्त एवम् मध्यम कदको हुनसक्छ ।दशम भावमा बुध भए माता-पिता, गुरुजनको हित गर्ने, आफ्नो बलले सवारीसहित धेरै धन उपार्जन गर्ने हुनसक्छ ।दशम भावमा बृहस्पति भए धन-धान्य एवम् सवारीले पूर्ण, नीति एवम् गुणको कारण मान्य तर परधन तथा परस्त्रीको लोभमा फसेर हीन पनि हुनसक्छन् ।दशम भावमा शुक्र भए भाइलाई कानको समस्या, जातक भोगी,राजासमान सुखी एवम् सुन्दर शरीरवाला हुनसक्छन् ।दशम भावमा शनि भए धनवान्, सेवकलाई माया गर्ने, परदेश गएर राजाको आश्रित एवम् शत्रुसँग भय नमान्ने हुनसक्छन् ।दशम भावमा राहु भए कामी, परधन लोभी, व्यर्थमा बोल्ने, चञ्चल एवम् दुष्ट विचारका हुनसक्छन् ।दशम भावमा केतु भए जातक पितृसुखहीन, भाग्यरहित, वाहन कष्ट हुनसक्छ । तर मेष, वृष, कन्या या वृश्चिक राशिमा भए जातकको शत्रुको नाश हुन्छ ।

## एकादश भाव ग्रहफल

लाभस्थाने ग्रहाः सर्वे राज्यलाभफलप्रदाः ।

गजाश्चपतिमीशं च सौम्याः कुर्वन्ति निश्चितम् ।।

अर्थ- एघारौं भाव (लाभभाव ) मा बसेका सबै ग्रहले जातकलाई लाभ नै प्रदान गर्दछन् । यदि त्यहाँ शुभ ग्रह बसेको भए अवश्य नै जातक सुखी हुन्छन् ।एकादश भावमा सूर्य भए जातक धनवान्, राजसेवक, भोगहीन,गुणग्राही, कृशदेह, धनयुक्त, स्त्रीप्रिय, चञ्चल एवम् आफ्नो जातिलाई माया गर्ने हुनसक्छ ।एघारौं भावमा शुभयुक्त चन्द्रमा भए धनवान्, सुखवान्, क्षीण अथवा शत्रु या नीचको राशिमा भए सुखहीन एवम् रोगले व्याकुल हुनसक्छन् ।एघारौं भावमा मङ्गल भए देवभक्त, सन्तानयुक्त, तर पीडासहितका क्रोधी पनि हुनसक्छन् । यदि उच्चकोटीको मङ्गल भए भाग्यशाली, धनी, तेजस्वी, पुण्यवान् तर धनका लोभी हुनसक्छन् ।एघारौं भावमा बुध भए शास्त्रचिन्तक, कुलपोषक, दुर्बलदेह, धनी एवम् सुन्दर नेत्रवाला हुनसक्छन् ।एघारौं भावमा बृहस्पति भए धनवान्, कुल-उपकारी, धर्मी एवम् अनेक धनले युक्त हुनसक्छन् ।एघारौं भावमा शुक्र भए उत्तम गुणले युक्त, धर्ममा मन दिने, सुन्दर,सुखभागी, हास्यप्रिय एवम् दर्शनीय हुनसक्छन् ।एघारौं भावमा शनि भए धनवान्, भोगी, शीतप्रिय, प्रसन्न, सुशील एवम् बाल्यावस्थामा रोगी हुनसक्छन् ।एघारौं भावमा राहु भए जितेन्द्रिय, श्यामवर्ण, सुन्दरवक्ता, परदेशवासी, चञ्चल, निर्लज्ज एवम् शास्त्रतत्त्वको ज्ञाता हुनसक्छन् ।एघारौं भावमा केतु भए जातक भाग्यवान्, विद्वान्, दर्शनीय स्वरूप,सुन्दर शरीर, सुवस्त्रधारी, तेजस्वी, शत्रुलाई कम्पायमान गराउने, अनेकौं प्रकारले लाभ गर्ने हुनसक्छन् ।

## द्वादश भाव ग्रहफल

कुशीलं च तथा काणं पापिनं दुःखितं नरम् ।

महाव्ययं महादुष्टं व्ययभावे यदा ग्रहाः ।।

अर्थ- केही अपवादलाई छाडेर बाह्रौं भावमा बसेका सबै ग्रहले जातकलाई दुष्ट स्वभावको, पापविचारी, दु:खी तथा धेरै खर्च गर्नेवाला नै बनाउँछ ।द्वादश भावमा सूर्य भए जातक मन्दबुद्धि, कामी, परस्त्रीगामी, पक्षी मारेर जीविकोपार्जन गर्ने, दुष्टहृदयी, कुरूप, राजश्रयले धन पाउने,कथावाचकको विरोधी एवम् जाँघको रोगवाला हुनसक्छन् ।बाह्रौं भावमा चन्द्रमा भए दुर्बल, कफरोग पीडित, क्रोधी, निर्धन हुनसक्छन् । कर्कट मिथुन, कन्या, धनु या मीनमा चन्द्रमा भए जातक कर्मनिष्ठ, दानी, कृशशरीर, सुखभोगी तर नीचका सेवक हुनसक्छन् ।बाह्रौं भावमा मङ्गल भए परधनलोभी, चञ्चलनेत्र, चञ्चलबुद्धि,हास्यप्रिय, उग्रस्वभाव, सुखी, परस्त्रीगामी, गवाही दिनेवाला एवम् कार्य पूरा गर्नेवाला हुनसक्छन् ।बाह्रौं भावमा पापयुक्त बुध भए विकल शरीरवाला, धनहीन,परधन परस्वीको लोभी, शुभयुक्त भए व्यसनरहित एवम् उपकारी हुनसक्छ ।बाह्रौं भावमा बृहस्पति भए बाल्यावस्थामा हृदयरोगी,कार्यमा असमर्थ, पापग्रहको राशिमा भए कुलोचित सम्पत्तिवाला,हृदयरोगी, दानादि कुलाभिमानी एवम् दम्भी हुनसक्छन् ।बाह्रौं भावमा शुक्र भए बाल्यावस्थामा रोगी, कृश एवम् मलिनशरीरवाला, दम्भयुक्त हुनसक्छन् ।बाढी भावमा शनि भए समूहको सरदार, रोगी, दुर्बलदेह दःखी,जाँघरोगी, क्रूरबुद्धि एवम् पक्षीवध गर्नेवाला हुनसक्छन् ।बाह्रौं भावमा राहु भए धन-धर्मरहित, दुःख पीडित, स्वीहीन,विदेशवासी, सुखहीन, खराब नह भएका एवम् कुरुप हुनसक्छन् ।बाह्रौं भावमा केतु भए जातक कटिभाग, गुदामार्ग, जाँघ आदिआको रोगले पीडित, मावली सुखको अभाव तर खर्च र शत्रुनाश गर्नमा माहिर हुनसक्छन् ।

# चन्द्रकुण्डली ग्रहभावफल वर्णन

चन्द्रः सर्वत्र बीजाभी लम्बञ्च कुसुमप्रभम् ।

फलेन सदृशोशश्च भावः स्वादुरसः स्मृतः ।।

अर्थ- शुभ या अशुभ रूपी वृक्षमा फुल्ने फूल भनेको लग्न, ग्रहको अंश फल,भाव स्वाद हो भने त्यस वृक्षको बीज या जरा भने चन्द्रमा हुन्। वृक्षको जरा जति बलियो हुन्छ, वृक्ष त्यति नै बलियो हुन्छ, अत: फल कथन गर्दा बीजरूप चन्द्रमाको ख्याल गर्नुपर्छ ।चन्द्रकुण्डली हेर्दा चन्द्रमा बसेको स्थानलाई नै पहिलो भाव मानेरविचार गरिन्छ ।

## प्रथम भाव

चन्द्रमासँगै सूर्य बसेको भए जातक परदेशवासी, सुख भोगी एवम्

कलहप्रिय हुन्छ । मङ्गल बसेको भए जातक लाल नेत्री, रक्तस्राव रोगी

एवम् रक्तवर्णको हुन्छ । बुध बसेको भए सुख एवम् रूपयुक्त, झूटो भाषण गर्न जान्ने, अरूसँग कलह गर्ने तर कुटुम्बीको प्रिय हुन्छ । गुरु बसेको भए दीर्घजीवि, रोग रहित, वीर तथा सदा धनले पूर्ण हुन्छ । शुक्र बसेको भए जल, सन्निपात या हिंसाबाट मृत्यु हुनसक्छ । शनि बसेको भए राग धनहीन अथवा बन्धुहीन हुनसक्छ ।

## दोस्रो भाव

चन्द्रमाबाट दोस्रो भावमा सूर्य बसेको भए जातक थुप्रै सेवक राख्ने,

यशस्वी राजमान्य, भाग्यमानी हुन्छ । मङ्गल भए जातकको पुत्र भूमिप

तथा खेती गर्नेवाला हुन्छ । बुध भए जातक धन-धान्यादियुक्त, गृह तथा

बन्धुसुख प्राप्त, चीसोको कारण मृत्यु हुने सम्भावना हुन्छ । बृहस्पति भा राजमान्य, दीघार्यु, उग्र, महाप्रतापी, पाप रहित, धर्मात्मा हुनसक्छ । शुक्र भए अत्यन्त धनी, महाज्ञानी एवम् राजासमान हुन्छ । शनि भए मातालाई कष्ट हुन्छ, जातक अरूको दूधबाट पालिन सक्छ ।

# तेस्रो भाव

चन्द्रमाबाट तेस्रो भावमा सूर्य भए जातक सुन राख्ने, पवित्र हृदयवाला एवम् राजातुल्य हुनसक्छ । मङ्गल भए भाइ युक्त, सुशील एवम् सुखी जीवनवाला हुनसक्छ । बुध भए धनसम्पत्ति एवम् राज्य लाभ गर्ने,ठूलाको सङ्गत गर्ने हुनसक्छ । बृहस्पति भए जातक पुरुषप्रिय, जातक १७ वर्षको हुँदा पिताले थुप्रै आर्थिक वृद्धि गर्ने हुनसक्छ । शुक्र भए जातक धर्मात्मा, बुद्धिमान् तथा म्लेच्छ जातिबाट धनलाभ गर्ने हुनसक्छ । शनि भए अधिक कन्या सन्तान भए पनि मर्न सक्छन् ।

# चौथो भाव

चन्द्रमाबाट चौथो भावमा सूर्य भए जातक मातालाई कष्ट दिने स्वभावको हुनसक्छ । मङ्गल भए सुखहीन, दरिद्र एवम् उसकै सामु श्रीमतीको मृत्यु हुनसक्छ । बुध भए सुखदायक, मातृकुलबाट विषेश लाभ गर्ने एवम् सुखपूर्वक जीवन बिताउने हुनसक्छ । बृहस्पति भए सुखहीन,मातालाई कष्ट, अर्काको कार्य गर्नेवाला हुनसक्छ । शुक्र भए कफ प्रकृति,दुर्बल देह तथा वृद्धावस्थामा धनपूर्ण हुनसक्छ । शनि भए महापुरुषार्थी, शत्रुलाई परास्त गर्ने हुनसक्छ ।

# पाँचौं भाव

चन्द्रमाबाट पाँचौं- भावमा सूर्य भए जातक छोरीबाट दुःखी, अधिक पुत्रवाला हुनसक्छ । मङ्गल भए पुत्रहीन र स्त्रीको कुण्डली भए सन्तानहीन गराउँछ । बुध भए बुद्धिमान्, विलक्षण सूझबूझवाला, सुन्दर, कामी एवम् कटुवाक्य बोल्नेवाला हुनसक्छ । बृहस्पति भए दिव्य दृष्टिवाला, तेजस्वी, अधिक पुत्रवाला, उग्र स्वभाव तथा महाधनी हुनसक्छ । शुक्र भए बहुकन्यावाला, धनवान् भए पनि लोकमा अपयश पाउने हुनसक्छ । शनि भए जातककी स्त्री श्याम वर्णकी प्रियवादिनी हुनसक्छे ।

# छैटौं भाव

चन्द्रमाबाट छैटौं- भावमा सूर्य भए जातक शत्रुलाई परास्त गर्ने,| वीर, क्षत्रिय कर्म गर्नेवाला हुनसक्छ । मङ्गल भए अधर्मलाई नाश गर्ने, तर| रक्तरोग पीडित हुनसक्छ । बुध भए कृपण, कातर, विवाद गर्न डराउने,| अधिक रौंवाला तथा दीर्घनेत्री हुनसक्छ । बृहस्पति भए उदासीन, गृहहीन,| दीर्घायु, भिक्षान्न गर्ने अथवा नीचकर्म गर्ने पनि बनाउन सक्छ । शुक्र भए| दिन्दित कार्यमा खर्च गर्ने, भयङ्कर एवम् युद्धमा पराजित हुनसक्छ ।| भए क्लेशभागी, कष्टयुक्त एवम् अल्पायुको हुनसक्छ ।

# सातौं भाव

चन्द्रमाबाट सातौं भावमा सूर्य भए जातककी स्त्री सुशीला, हुन्छिन्, जातक स्वयम् पनि सुशील एवम् राजमान्य हुन्छ । मङ्गल भा दुःशीला एवम् अप्रियवादिनी हुनसक्छिन् । बुध भए स्त्रीको वशमाकृपण, धनवान् एवम् दीर्घायु हुनसक्छ । बृहस्पति भए दीर्घजीवी, मितवस्थूल शरीरवाला, नपुंसक, पाण्डुरोगी एवम् घरको मुखिया हुनसक्छ ।भए लोकप्रसिद्ध, महायोद्धा, दानी, भोगी एवम् धनवान् हुनसक्छ । शनि धर्म गर्ने, दाता एवम् बहु विवाह गर्नेवाला हुनसक्छ ।

# आठौं भाव

चन्द्रमाबाट आठौं भावमा सूर्य भए जातक सदा क्लेश अत्यन्त रोगी हुनसक्छ । मङ्गल भए जीवघाती, पापविचारी, शील एवम् सत्यरहित हुनसक्छ । बुध भए शीत प्रकृति, विख्यात एवम् शत्रुभय दिने हुनसक्छ । बृहस्पति भए शरीर रोगी, विचारवान्, क्लेशभागी' स्वप्नामा पनि सुखी नहुने हुनसक्छ । शुक्र भए पुरुषार्थहीन एवम् जे मा शङ्कामात्रै गर्ने स्वभावको हुनसक्छ । शनि भए पितालाई कष्ट हुन्छ !दान गर्नाले उसको कल्याण हुन्छ ।

# नवाँ भाव

चन्द्रमाबाट नवौं भावमा सूर्य भए जातक धर्मात्मा. सत्यवक्ता,बन्धुलाई क्लेश दिनेवाला हुनसक्छ । मङ्गल भए लक्ष्मीवान्, वृद्धावस्था पुत्रबाट सुखी हुनसक्छ । बुध भए धर्म विरोधी, परिणाममा क्लेश कारअन्य धर्म अपनाउने एवम् थुप्रैसँग विरोध गर्ने हुनसक्छ । बृहस्पति धर्मात्मा, धनवान, सुमार्गगामी, देव एवम् गुरुजनको सेवक हुनसक्छ । शुक्रभए थुप्रै भाइ बहिनी तथा मित्रवाला हुनसक्छ । शनि भए शनिको दशा- अन्तदर्शामा धर्ममा हानि हुन्छ ।

# दसौं भाव

चन्द्रमाबाट दशौं भावमा सूर्य भए जातकको ढोकामा धनी, व्यापारीहरूको आगमन भइरहन्छ । मङ्गल भए धनवान् हुन्छ । बुध भए राजयोग हुन्छ, यदि कर्कट राशिमा बसेको चन्द्रमादेखि दसौं भावमा बुध भए कुलमा श्रेष्ठ हुन्छ । बृहस्पति भए स्त्री- पुत्रादिलाई छोडेर तपस्या गर्नेवाला हुनसक्छ । शुक्र भए दीर्घायु एवम् माता- पिताबाट सुख पाउने हुनसक्छ ।शनि भए राजातुल्य धनवान् भए पनि कृपण हुन्छ ।

# एघारौं भाव

चन्द्रमाबाट एघारौं भावमा सूर्य भए जातक राजगौरववाला, बहु विषय ज्ञाता, ख्याती प्राप्त एवम् कुलमा श्रेष्ठ हुनसक्छ । मङ्गल भए राजदरबारमा सम्मान पाउने, यश एवम् रूपयुक्त हुनसक्छ । बुध भए हरेककार्यमा लाभ हुन्छ, विवाहपछि जातकको भाग्योदय हुन्छ । बृहस्पति भएराजासमान सुखभागी हुनसक्छ । शुक्र भए दीर्घायु, शत्रु तथा रोगरहित हुनसक्छ । शनि भए पशुधनयुक्त, दीर्घायु एवम् सुखी रहनेवाला हुनसक्छ ।

# बाह्रौ भाव

चन्द्रमाबाट बाह्रौ भावमा सूर्य भए जातक काना अथवा तेजहीन हुनसक्छ । मङ्गल भए दशा-अन्तदर्शाको समयमा मातासहित सबैलाई कष्ट दिनेवाला हुनसक्छ । बुध भए कृपण, सन्तान पनि अविजयी बृहस्पति भए कुटुम्ब विरोधी बनेर शत्रुलाई सुख दिने हुन्छन्।हुनसक्छ । शुक्र परस्त्रीगामी, लम्पट एवम् ज्ञानहीन हुनसक्छ । शनि भए धन पापविचारी एवं भिखमङ्गा स्वभावको हुनसक्छ ।

# चन्द्रमाबाट राहु र केतु

चन्द्रमाबाट प्रथम (चन्द्रमासँगै अथवा नवौं र दशौं भावमाअथवा केतु भए जातक बाल्य एवम् यौवन अवस्थामा सुखी-दुःखी दुवै हुने तर वृद्धावस्थामा भने पूर्ण धनी हुनसक्छन् । ३, ६, ११ भावमा राजमन्त्रीसमान धन-धान्यपूर्ण हुनसक्छन् । ४ या ७ भावमा भए माता भए पिता एवम् पत्नीलाई कष्ट हुनसक्छ २.८, १२ भावमा भए धनजनयुक्तभए पनि कहिल्यै सुख नपाउने हुनसक्छ ।द्रष्टव्य माथि उल्लेखित फलहरूमध्ये केही फलले जातककोसमग्र जीवनमा प्रभाव पार्दछ भने केही फलहरू भने सम्बन्धित ग्रहकोदशा- अन्तदर्शाको समयमा देखिन्छन् । जस्तो चन्द्रमाबाट छैटौंमा मङ्गल

जस्तो चन्द्रमाबाट छैटौंमा मङ्गल

भए जातकले समग्र जीवनमै अधर्मको विरोध गर्दछ, तर मङ्गलको

दशा-अन्तर्दशाको समयमा जातकको शरीरमा रक्तरोग उत्पन्न हुनसक्छ ।

यसै क्रमले अरूहरूको पनि बुझ्नुहुनेछ ।

भावेश फल कथन

कल्याणानि दिवामणिः सललितां कान्ति कलानां निधि-

लक्ष्मी क्ष्मातनयो बुधश्च बुधता जीवश्चिरं जीविताम् ।

साम्राज्य भुमुजोकंजो विजयता राहुर्बलोत्कर्षता

केतुयच्छतु तस्य वाञ्छितमिव पत्री यदीयोत्तमा ।।

अर्थ- सूर्यले कल्याण, चन्द्रमाले सुन्दर कान्ति मङ्गलले लक्ष्मी, बुधले

पाण्डित्य, गुरुले चिरजीविता, शुकले साम्राज्य, शनिले विजय, राहुले

बलवृद्धि तथा केतुले अभीष्ट सिद्धि गरुन् ।

माथिका शब्दले नवग्रहसँग प्रार्थना गर्दै १२ भाव स्थित भावेश फल

कथन गर्दछ ।

## लग्नेशको फल

पहिलो भावमा भएको अङ्कको स्वामी फल लग्नेश लग्नमा नै बसेको भए जातक रोगहीन, दीर्घायु, अति बलवान्, राजासमान एवम् जग्गाजमिनको मालिक हुनसक्छ ।लग्नेश दोस्रो भावमा भए जातक धनी, दीर्घजीवी, स्थूल शरीर, बडा बलवान्, राजासमान, जमिन्दार अथवा धर्मात्मा हुनसक्छ ।लग्नेश तृतीय भावमा भए जातक उत्तम बन्धु मित्रले युक्त,धर्मात्मा, दाता, शूरवीर एवम् बलवान् हुनसक्छ ।लग्नेश चतुर्थ भावमा भए जातक राजप्रिय, चिरञ्जीवी, पितृधन पाउने, माता-पिता भक्त एवम् थुप्रो खाने खालको हुनसक्छ ।लग्नेश पञ्चम भावमा भए जातक सुपुत्रवान्, दाता, राजा,विख्यात, दीर्घायु एवम् सुकर्मी हुनसक्छ ।लग्नेश छैटौं भावमा भए जातक रोगहीन, जमिन्दार, बलवान्,शत्रुलाई जित्ने, सत्कर्मी एवम् धनी हुनसक्छ ।लग्नेश सातौं भावमा भए जातक तेजस्वी तर शोकयुक्त हुनसक्छ ।उसकी स्त्री सुशील, तेजस्विनी एवम् सुन्दरी हुनसक्छिन् ।लग्नेश आठौं भावमा भए जातक कृपण, धनसङ्ग्रहा तर पापग्रह भए क्रूर र शुभ ग्रह भए सौम्य स्वभावको हुनसक्छ ।लग्नेश नवौं भावमा भए जातक अधिक बन्धुबाला, पुरसबैको मित्र, बुद्धिमान्, सुशील, विख्यात एवम् तेजस्वी हुनसक्छ ।लग्नेश दशौं भावमा भए जातक राज्यबाट लाभ पाउने, बिद्वार सुशील, गुरु-पितृभक्त एवम् कुनै स्थानविशेषमा प्रसिद्धि पाउने वालहुनसक्छ ।लग्नेश एघारौं भावमा भए जातक सुखयुक्त, चिरञ्जीवी, पुत्रवान् विख्यात, तेजस्वी, बलवान् एवम् वाहनयुक्त हुनसक्छ ।लग्नेश बाह्रौं भावमा भए जातक कुकर्मी, परद्वेषी, नीच, बन्धुहरूमानी, परदेशी एवम् अर्काको अन्न खानेवाला हुनसक्छ ।

# धनेश फल

दोस्रो भावमा भएको अङ्कको स्वामी फल धनेश लग्नमा भए जातक कृपण, व्यवसायी, सत्कर्म गर्ने, धनवान्, धनीहरूमा ख्याति कमाउने एवम् अतुल सुखभोग गर्नेवाला हुन सक्छ ।धनेश आफ्नै स्थान अर्थात् दोस्रो भावमा भए जातक व्यवसायबाट लाभ गर्ने, सत्य छिपाउने, नीच, बाँध बनाउने एवम् कर्ममा उद्यत रहने किसिमको हुनसक्छ ।धनेश तेस्रो भावमा पापग्रहको रूपले भए जातक बन्धसँग भेद नगने, शुभ ग्रह भए राजा (ठूला) को विरोध गर्ने तथा धनेशको रूपमा  मङ्गल तृतीयभावमा भए जातक चोरबुद्धिको हुनसक्छ ।धनेश यदि शुभ ग्रहको रूपले चतुर्थ भावमा भए पितृधन पाउने,सत्यभाषी, दयालु, दीर्घायु हुनसक्छ । तर पापग्रहको रूपले भए मरणकारकपनि हुनसक्छ ।धनेश पञ्चमभावमा भए जातक पुत्रसुखी, कठिन कर्म गर्नेवाला,कृपण एवम् दुःखी हुनसक्छ ।धनेश छैटौं भावमा भए जातक धनसङ्ग्रही, शत्रुलाई परास्त गर्ने,शुभ ग्रह भए भूमिलाभ गर्ने एवम् पापग्रह भए निर्धन हुनसक्छ ।धनेश सप्तम भावमा शुभ ग्रहको रूपले भए जातककी स्त्री सुशीला, विलासिनी, सौभाग्यवती, धनसङ्ग्रही हुनसक्छिन्, तर पापग्रहको रूपले भए बन्ध्या हुनसक्छिन् ।धनेश आठौं भावमा भए जातक कार्यमा असफल, आत्मघाती, प्राप्तसुखलाई भोग्नेवाला, विलासी, परधनहारक एवम् प्रारब्धवादी हुनसक्छ ।धनेश शुभ ग्रहको रूपले नवौं भावमा भए जातक दानी,वचनपालक र अशुभ ग्रहको रूपले भए दरिद्र, भिखारी एवम् विडम्बनाले युक्त हुनसक्छ ।धनेश दशौं भावमा भए जातक राजमान्य, राजाबाट धन पाउनेहुनसक्छ । शुभ ग्रहको राशिमा भए माता-पिताको भक्त हुन्छ ।धनेश एघारौं भावमा भए जातक ग्रहगति (भविष्य जान्ने ज्योतिष'शास्त्र)बाट धन उपार्जन गर्ने, विख्यात, जनसमूहको पालक हुनसक्छ ।धनेश बाह्रौं भावमा पापग्रहको रूपले भए जातक कृपण एवम्निर्धन हुनसक्छ । तर शुभ ग्रहको रूपले भए लाभ-हानि बराबर गर्नेवालाहुनसक्छ ।

# द्वादशभावस्थित सहजेश

तेस्रो भावमा भएको अङ्कको स्वामी फल तृतीयेश लग्नमा भए जातक बकवास गर्ने, लम्पट, परिवारमा झै गर्ने, नोकरी गर्ने, कुमित्र एवम् नक्कली वस्तु बनाउने हुनसक्छ ।तृतीयेश पापग्रहको रूपले धन भावमा भए जातक भिक्षुसमान, निर्धन अल्पायु एवम् बन्धुविरोधी हुनसक्छ । तर शुभ ग्रह भए धनवान् हुन्छ ।तृतीयेश आफ्नै स्थान तृतीय भावमा भए जातक बलवान,सुमित्रवाला, देवता-गुरुभक्त एवम् राज्यवाट धन पाउनेवाला हुन्छ ।सहजेश चतुर्थ भावमा भए बन्धुवर्गादिको सुख पाउने तर आमासँग चाहिँ शत्रुता गर्दै पिताको धन खाने हुनसक्छ ।सहजेश पञ्चम भावमा भए छोरा, भतिजा एवम् अन्य सहोदरहरूद्वारा पालित भए पनि दीर्घायु एवम् परोपकारी हुनसक्छ ।तृतीयेश छैटौं भावमा भए जातक बन्धुविरोधी, नेत्ररोगी, भूमिउपार्जन गर्नेवाला एवम् कहिलेकाहीं बिरामी भइरहने हुनसक्छ ।तृतीयेश शुभ ग्रहको रूपले सातौं भावमा भए जातककी स्त्रीसौभाग्यवती एवम् सुशीला हुन्छिन् तर अशुभ ग्रह भए देवरको घरमा आश्रय लिने हुन्छिन् ।पापग्रह भएर आठौं भावमा बसेको भए जातक अङ्गहीन अथवातृतीयेश आठौं भावमा भए जातक सहोदरहीन हुनसक्छ । यदि त्योपनि हुनसक्छ ।अल्पायुकोसहजेश पापग्रहको रूपले नवौं भावमा भए जातक बन्धुहीन हुनसक्छ।तर शुभ ग्रह भए सद्बन्धु, पुण्यवान्, विद्वान् एवम् सहोदरको भक्त हुनसक्छ ।तृतीयेश दशौं भावमा भए जातक राजमान्य, माता, पिता, बन्धुभक्त एवम् सद्बुद्धिवाला हुनसक्छ ।तृतीयेश एघारौं भाव (आयभाव) मा भए जातक उत्तम बन्धुवाला,राजासमान, बन्धुपालक एवम् भोगी हुनसक्छ ।सहजेश (तृतीयेश) बाह्रौं भाव (खर्चभाव ) मा भए जातकमित्रविरोधी, बन्धुलाई सन्ताप दिने, बन्धुसँग टाढा बस्ने एवम् विदेशमारहनेवाला हुनसक्छ ।

## द्वादशभावस्थित चतुर्थेश

चौथो भावमा भएको अङ्कको स्वामी फल  चतुर्थेश लग्नमा भए जातक पितापुत्रमा परस्पर प्रेम, पितृकुलमा

श्रेष्ठ, पिता एवम् आफ्नो नामले विख्यात हुनसक्छ ।चतुर्थेश पापग्रहको रूपले दोस्रो भावमा भए पिताको विरोधी शुभ ग्रह भए पिताको भक्त हुनसक्छ । जातकले उपार्जन गरेको धनको भोग उसका पिताले गर्नेछन् ।चतुर्थेश तेस्रो भावमा भए जातक आमाबुबासँग विभेद राख्ने,पितासँग कलह गर्ने एवम् पिताका बन्धुहरूका लागि घातक हुनसक्छ ।चतुर्थेश आफ्नै स्थान चतुर्थ भावमा भए जातकको पितालाईराज्यवाट आदर, जातक विख्यात, पिताको लागि लाभकारी, धर्मात्मा, सुखीएवम् धनवान् हुन्छ ।चतुर्थेश पाँचौं भावमा भए जातकका पिताले राजा (ठूला) बाटआदर पाउनेछन् । स्वयम् जातक पनि विख्यात, पिताका लागि लाभकारी,धर्मात्मा, सुखी एवम् अति धनवान् हुनसक्छ ।ससुरा चतुर्थेश छैटौं भावमा भए जातक माताको धन नष्ट गर्नवाला, शुभ भए पिताको धन सञ्चय गर्ने र पापग्रह भए पिताको दोष खोज्ने हुनसक्छ ।चतुर्थेश पापग्रहको रूपले सातौं भावमा भए उसकी स्वी लागि कष्टकारी र शुभ ग्रह भए ससुराको सेवा गर्ने खालकी हुनसक्छ ।मद्गल या शुक्र चतुर्थेशको रूपले सप्तम भावमा भए जातककीकुलीना हुन्छे ।चतुर्थेश अष्टम भावमा भए जातक क्रूर, रोगी, दरिद्र, कुकर्मी तदमर्न मात्रै खोज्ने हुन्छ ।चतुर्थेश नवम भावमा भए पितासँग अलग रहने, सबै खाले विद्याको ज्ञाता, पिताको धर्म पालन गर्ने, तर पिताको उपेक्षा गर्ने हुनसक्छ ।चतुर्थेश पापग्रहको रूपले दशौं भावमा भए जातकका पिताले उसकी आमालाई त्यागेर अर्को विवाह गर्नसक्छे । शुभ ग्रह भए जातअर्काको पालन गर्ने परोपकारी हुनसक्छ ।चतुर्थेश एघारौं भावमा भए जातक धर्मात्मा, परिजनपालकसत्कर्मी, पिताभक्त, दीर्घायु एवम् रोगहीन हुनसक्छ ।चतुथेश शुभ ग्रहको रूपले बाह्रौं भावमा भए जातकको जन्म हुँदा पिताकोउपस्थिति नरहेको तथा पापग्रह भए जातकको पिता अस्पष्ट रहेको हनसक्छ ।

# द्वादश भावस्थित पञ्चमेश

पाँचौ भावमा भएको अङ्कको स्वामी फल पञ्चमेश लग्नमा भए जातक लोकमा विख्यात, थोरै सन्तानवाला शास्त्रज्ञ एवम् सुकमी हुनसक्छ।पञ्चमेश पापग्रहको रूपले दोस्रो भावमा भए जातक निर्धन,सङ्गीतज्ञ, भोजन पाउन कष्ट तथा शुभ ग्रह भए सुखी हुनसक्छ ।पञ्चमेश तेस्रो भावमा भए जातक मधुरभाषी, लोकविदित हुनसक्छ। उसको पुत्रले पनि योग्य भएर परिवारको रक्षा गर्दछ ।पञ्चमेश चतुर्थ भावमा भए जातक पिताको कर्मलाई पछ्याउने,पिताद्वारा पालित, मातृभक्त हुनसक्छ । तर पापग्रह भए माता-पिताविरोधी हुनसक्छ ।पञ्चमेश पञ्चम भावमै भए जातक बुद्धिमान् मानी, पुत्रवान्,प्रसिद्धहरूमा श्रेष्ठ हुनसक्छ ।पञ्चमेश शुभ ग्रहको रूपले छैटौं भावमा भए जातक थुप्रै शत्रुवाला, मानहीन र पापग्रह भए रोगी एवम् निर्धन हुनसक्छ ।पञ्चमेश सप्तम भावमा भए जातककी स्त्री प्रियवादिनी, सुशीला हुन्छे पुत्र सुन्दर हुन्छ एवम् ऊ देव-गुरुको भक्त हुनसक्छ ।पञ्चमेश आठौं भावमा भए जातक स्त्रीरहित हुनसक्छ, स्त्री भए क्रोधिनी, अगहना हुनसक्छे, जातकका भाइ, पुत्र पनि क्रोधी तथा अगहीन हुनसक्छन् ।पञ्चमेश नवौ भावमा भए जातक सुबुद्धि, विद्यावान्, कवि,सङ्गीतज्ञ, राजमान्य, सुन्दर एवम् नाटकप्रिय हुनसक्छ ।पदमेश दश भावमा भए जातक राजकर्मचारी, राजमान्य,सत्कर्मी, श्रेष्ठ एवम् माताका लागि सुखकारक हुनसक्छ ।पञ्चमेश एघारौ भावमा भए जातक शूर पुत्रवान्, सत्यज्ञ,संगीतज्ञ एवम् राजाबाट सम्मानित हुनसक्छ ।पञ्चमेश पापग्रहको रूपले बाह्रौं भावमा भए जातक पुदीनशुभ ग्रह भए पुत्रवान् हुनसक्छ । त्यस पुत्रबाट सन्तोष भए पनिपरदेशवासी हुनसक्छ ।

# द्वादशभावस्थित षष्ठेश

छैटौं भावमा भएको अङ्कको स्वामी फल पुत्र छैटौं भावको स्वामी लग्नमा भए जातक निरोगी, बलवान् कुटुम्बलाई कष्ट दिने, थुप्रैलाई आफ्नो पक्षमा राख्ने, शत्रुलाई परास्त गरे बोलकड एवम् धन कमाउनमा स्वच्छन्द हुनसक्छ ।छैटौं भावका स्वामी दोस्रो भावमा भए जातक दुष्ट, चतुर,धनसङ्ग्रही, उत्तम स्थानमा बस्ने ख्यातिवाला, रोगी एवम् मित्ररहितहुनसक्छ । छैटौं भावको स्वामी तेस्रो भावमा भए जातक लोककष्टकारी, नीच आचरणवाला, लडाइँ-झगडाको कारण कष्ट पाइरहने हुनसक्छ ।छैटौं भावको स्वामी चौथो भावमा भए जातकको पिता रोगी एवम् जातकसँग शत्रुता हुनसक्छ । तर जातक पुत्रसहित सम्पत्तिवान् हुनसक्छ ।पष्ठेश पाप या क्रूर ग्रहको रूपले पञ्चम भावमा भए जातकले पुत्रसँग शत्रुता हुँदा मरणतुल्य दुःख पाउने, शुभ ग्रह भए जातक निर्धन, दुष्ट एवम् कपटी हुनसक्छ ।षष्ठेश आफ्नै स्थान (छैटौं भाव) मा भए जातक निरोगी. अकारण अरूसँग शत्रुता गर्ने, सुखी, कृपण, कहिल्यै खिन्न नहुने तर दूषित स्थानमा बस्ने हुनसक्छ ।षष्ठेश पापग्रहको रूपले सातौं भावमा भए जातककी स्त्री अनुपयुक्त आचरण भएकी, क्रोधवती, सन्ताप दिने किसिमकी तथा शुभ ग्रहभए वन्ध्या या नष्टगर्भवाली हुनसक्छे । षष्ठेशको आठौं भावमा फरकफरक रूप हुन्छ । शनि पष्ठेश भएर आठौं स्थानमा बसेको भए जातक सङ्ग्रहणी रोगवाला, चन्द्रमा भए शीघ्रमरणभय, मङ्गल भए सर्पादिको भय, बुध भए विषभय, रवि भए सिंह-व्याघ्रादि भय, बृहस्पति भए दुष्टबुद्धि, शुक्र भए नेत्रदोष आदि हुनसक्छ। अर्थात् आठौं स्थानमा बसेका कुनै पनि षष्ठेशले राम्रो फल दिँदैनन् । षष्ठेश नवौं भावमा पापग्रहको रूपले भए जातक लङ्गडो, बन्धुविरोधी, शास्त्र नमान्नेवाला र शुभ ग्रह भए भिखारी स्वभाववालाहुनसक्छ । षष्ठेश दशौँ भावमा पापग्रहको रूपले भए जातक मातासँग 'शत्रुता गर्ने एवम् दुष्ट स्वभावको हुनसक्छ । शुभ ग्रह भए धर्म एवम् सन्तानकोपालक भए पनि मातृदोष भने नछुट्नसक्छ । षष्ठेश पापग्रहको रूपले एकादश भावमा भए जातकको मृत्यु शत्रुबाट हुनसक्छ । शुभ ग्रह भए शत्रु एवम् चोरलाई नष्ट गर्ने, पशुपालनबाट लाभ गर्ने हुनसक्छ । षष्ठेश बाह्रौं भावमा भए पशुद्वारा धनको हानि, दौडधुप गर्नालेधनलाभ एवम् प्रारब्धवादी हुनसक्छ ।द्रष्टव्य- षष्ठेश जहाँ बस्छ त्यसले प्रायः गरेर त्यस भावलाईबिगार्ने नै काम गर्दछ ।

# द्वादशभावस्थ सप्तमेश

सातौं भावमा भएको अड्कको स्वामी फल सप्तमेश लग्नमा भए जातक आफ्नी स्त्रीसँग विशेष प्रेम गरे पनि अन्यसँग पनि प्रेम राख्नेवाला, भोगी एवम् सुन्दर हुनसक्छ ।सप्तमेश दोस्रो भावमा भए जातककी स्त्री दुष्ट स्वभाव एवम् पुत्रको इच्छा गर्नेवाली हुनसक्छे । जातकले स्त्रीबाट धनलाभ गरे पनि धेरै समय स्त्री-सङ्गबाट रहित हुनसक्छ ।सप्तमेश तेस्रो भावमा शुभ ग्रह भए जातक आत्मबली, बन्धुसँग प्रेम राख्ने र पापग्रह भए उसकी स्त्री सुन्दर भए पनि देवर या मित्रको घरमारहनेवाली हुनसक्छे ।सप्तमेश चौथो भावमा भए जातक चञ्चल, पिताका शत्रुसँग स्नेह गर्ने,पिता पनि कटुभाषी एवम् स्त्री आफ्नो पिताको घरमा पालित हुनसक्छे सप्तमेश पाँचौं भावमा भए जातक भाग्यवान्, पुत्रयुक्त, साहसी तर दुष्टबुद्धिको हुनसक्छ । उसकी स्त्रीको मात्रै पालन छोराले गर्नेछ ।सप्तमेश छैटौं भावमा भए जातक स्त्रीविरोधी, रोगिणी, स्वीसँग रहित हुनसक्छ । पापग्रह भए जातकले मृत्युतुल्य दु:ख पाउनसक्छ । सप्तमेश आफ्नै स्थान (सातौं भावमा भए जातक दीर्घायु, स्त्रीप्रेमी, सुशील एवम् तेजस्वी हुनसक्छ ।सप्तमेश आठौं भावमा भए जातकको विवाहमा कष्ट, वेश्यागामी,चिन्तायुक्त एवम् दु:खी हुनसक्छ ।सप्तमेश नवौ भावमा भए जातक तेजस्वी, स्त्री-पुरुष नै सुशील हुनसक्छन् । पापग्रह भए जातक नपुंसक, कुरूप हुनसक्छ । यदि सप्तमेशमाथि लग्नेशको दृष्टि परेको भए जातक नीतिशास्त्रमा प्रबलहुनसक्छ ।सप्तमेश दशौं भावमा भए जातक राजदोषी, कपटी हुनसक्छ ।पापग्रह भए दु:खी एवम् शत्रुद्वारा पराजित हुनसक्छ ।सप्तमेश एघारौं भावमा भए जातककी स्त्री पतिव्रता, सुन्दरी,सुशीला एवम् स्नेहयुक्त हुनसक्छिन् ।सप्तमेश बाह्रौं भावमा भए जातक घर एवम् बन्धुको कार्यमा हुनसक्छ । तर उसकी विवाहिता स्त्री उसदेखि पर हुनसक्छिन् ।

# द्वादशभावस्थ अष्टमेश

आठौं भावमा भएको अङ्कको स्वामी फल अष्टमेश लग्नमा भए जातक थुप्रै विघ्नबाधायुक्त, दीर्घरोगी, चोरबुद्धि, व्यर्थ विवाद गर्ने एवम् राजाबाट धन लाभ गर्ने हुनसक्छ ।अष्टमेश पापग्रहको भएर दोस्रो भावमा भए जातक अल्पायु, शत्रुयुक्त, चोरबुद्धिको र शुभ ग्रहयुक्त भए अत्यन्त शुभ फल दिने भए पनिराजाद्वारा मारिने हुनसक्छ ।अष्टमेश पापग्रहको भएर दोस्रो भावमा भए जातक अल्पायु,शत्रुयुक्त, चोरबुद्धिको र शुभ ग्रहयुक्त भए अत्यन्त शुभ फल दिने भए पनि राजाद्वारा मारिने हुनसक्छ ।अष्टमेश तेस्रो भावमा भए जातक बन्धु एवम् मित्र विरोधी,अङ्गहीन, कटुभाषी, चञ्चल एवम् सहोदरहीन हुनसक्छ ।अष्टमेश चतुर्थ भावमा भए जातक पितासँग शत्रुता गरेर धन छिन्न खोज्ने, पिता-पुत्रमा कलह एवम् पिता रोगी हुनसक्छन् ।अष्टमेश पापग्रहको रूपले पञ्चम भावमा भए जातक पुत्रहीन हुनसक्छ । शुभ ग्रह भए उसको पुत्र शीघ्र मरणवाला अथवा धूर्त हुनसक्छ ।अष्टमेश छैटौं भावमा हुँदा फरकफरक फल दिनेवाला हुन्छन सूर्य भए शासनविरोधी, गुरु भए शरीर रोगी, शुक्र भए नेत्ररोगी, चन्द्ररोगी, मङ्गल भए क्रोधी, बुध भए डरपोक एवम् मुखरोगी,कष्टवान् हुनसक्छन् । अझ त्यहाँ चन्द्र अथवा बुधबाट हरिएको भए िअनिष्टकारी हुनसक्छ ।अष्टमेश सातौं भावमा भए जातक उदररोगी, दुःशीला स्त्रीकोदुष्ट स्वभाव, पापग्रह भए स्वीद्वारा कष्ट पाउने हुनसक्छ ।अष्टमेश आठौं भावमा भए जातक उद्योगी, रोगरहित, धूर्त हुनसक्छ।अष्टमेश नवौं भावमा भए जातक सङ्गहीन, जीवधारपापविचारी, बन्धुहीन, प्रेमहीन, शत्रुहरूमा मान्य एवम् अङ्गहीन विकृतअङ्गवाला हुनसक्छ ।अष्टमेश दशौं भावमा भए जातक राजकर्मचारी, अर्काको निदगर्नेवाला, अल्छी हुनसक्छ । पापग्रह भए जातकको पुत्र या मातामध्ये एक मृत्यु हुनसक्छ ।अष्टमेश एघारौं भावमा भए जातक बाल्यावस्थामा दुःखी तर सुखी हुनसक्छ । पापग्रह भए अल्पायु र शुभ ग्रह भए दीर्घायु हुनसक्छ निर्दयअष्टमेश बाह्रौं भावमा भए जातक कटुभाषी, चोरबुद्धि, शठ,एवम् स्वच्छाचारी हुनसक्छ । मृत्यु पनि दुर्गतियुक्त हुनसक्छ ।

# द्वादशभावस्य नवमेश

नवी भावमा भएको अड्कको स्वामी फल नवौं भावको स्वामी लग्नमा भए जातक देव एवम् गुरुको भक्त महाबली, कृपण, राजकर्मचारी, अल्पाहारी एवम् बुद्धिमान् हुनसक्छ ।नवमेश दोस्रो भावमा भए जातक धर्ममा विख्यात मशीन बुद्धमान हुनसक्छ । नवमेश दोस्रो भावमा भए जातक धर्ममा विख्यात, सुशील,प्रियवत्सल, पुण्यवान्, मुखरोगी एवम् पशुबाट पीडा पाउने हुनसक्छ ।नवमेश तेस्रो भावमा भए जातक स्त्री एवम् बन्धुको स्नेही, रक्षक,बन्धुजनसंगै जीवन व्यतीत गर्ने हुनसक्छ ।नवमेश चौथो भावमा भए जातक पिताभक्त, पिताको कर्म गर्ने,विख्यात एवम् पुण्यवान् हुनसक्छ ।नवमेश पाँचौं भावमा भए जातक पुण्यवान्, देव गुरुको भक्त,सुन्दर एवम् उसका सबै सन्तान पनि पुण्यवान् हुनसक्छन् ।नवमेश छैटौँ भागमा भए जातक शत्रुसँग झुक्ने, कार्य सम्पन्न गर्न नसक्ने, दर्शनशास्त्रको निन्दक हुनसक्छ ।नवमेश सातौं भावमा भए जातककी स्वी सत्यवादिनी, सुन्दरी,शीलसम्पत्तिले युक्त एवम् पुण्यवती हुनसक्छिन् ।नवमेश आठौं भावमा भए जातक दुष्ट-हिंसक स्वभाव, घर-बन्धुरहित, पुण्यहीन एवम् पापग्रह भए नपुंसक पनि हुनसक्छ ।नवमेश नवौं भावमा भए बन्धुप्रेमी, दानी, देव गुरुभक्त, स्वजन एवम् स्त्रीआदिमा प्रेम राख्नेवाला हुनसक्छ ।नवमेश दशौं भावमा भए जातक राज कर्मचारी, शूर, माता-पिताको भक्त एवम् धर्मात्मा हुनसक्छ ।नवमेश एघारौं भावमा भए जातक दीर्घायु, धर्मात्मा, धनवान्, लोकप्रेमी, राजधन पाउने, पुण्यवान् एवम् उत्तम पुत्रवाला हुनसक्छ ।नवमेश बाह्रौं भावमा भए जातक देशान्तरमा मान पाउनेवाला, सुन्दर, शुभ ग्रह भए विद्यावान् र पापग्रह भए धूर्त हुनसक्छ ।

# द्वादशभावस्थ दशमेश

दशौं भावमा भएको अड्कको स्वामी फल दशमेश जसलाई कर्मेश पनि भनिन्छ लग्नमा भए जातक मातादतर पिताको भक्त हुनसक्छ । पिताको मृत्यु भएको खण्डमा उसकी आम अर्काको घरमा बस्नसक्छिन् । कर्मेश दोस्रो भावमा भए जातक माताद्वेषी, अल्पाहारी, सुकर्म जाने तर लोभी हुनसक्छ ।कर्मेश तेस्रो भावमा भए जातक माता एवम् स्वजन विरोधी सेवाकार्य गर्ने, कार्यमा असमर्थ एवम् मामाघरमा पालित हुनसक्छ ।कर्मेश चौथो भावमा भए जातक सुखी, सदाचारी, माता-पिताको भक्त तथा राजमान्य हुनसक्छ ।कर्मेश पाँचौं भावमा भए जातक सुकर्ममा विडम्बना गर्ने, राजधनपाउने, गीत-वाद्य आदि जान्ने, मातापालित हुनसक्छ ।कर्मेश दोस्रो भावमा भए जातक माताद्वेषी, अल्पाहारी, सुकर्म जान्ने तर लोभी हुनसक्छ ।कर्मेश तेस्रो भावमा भए जातक माता एवम् स्वजन विरोधी सेवाकार्य गर्ने, कार्यमा असमर्थ एवम् मामाघरमा पालित हुनसक्छ ।कर्मेश चौथो भावमा भए जातक सुखी, सदाचारी, माता-पिताको भक्त तथा राजमान्य हुनसक्छ ।कर्मेश पांचौं भावमा भए जातक सुकर्ममा विडम्बना गर्ने, राजधन पाउने, गीत-वाद्य आदि जान्ने, मातापालित हुनसक्छ ।कर्मेश छैटौं भावमा भए जातक शत्रुदेखि डराउने, झगडालु, कृपण,कृपाहीन तर रोगरहित हुनसक्छ।कर्मेश सातौं भावमा भए जातककी स्त्री पुत्रवती, पतिसेवापरायणएवम् शुभकार्यमा लागिरहने हुनसक्छिन् ।कर्मेश आठौं भावमा भए जातक कुटिल, शूर, मिथ्यावादी, दुष्ट,मातालाई कष्ट दिने, अल्पायु एवम् धूत हुनसक्छ ।कर्मेश नवी भावमा भए जातक सुशील, उत्तम बन्धुबाला हनसक्छ। उसकी माता पनि सुशीला, पुण्यवती एवम् सत्यवादिनी हुनसक्छिन्। कर्मेश दश भावमा भए जातक मातालाई सुख दिने, माताबाट सुख पाउने तथा बोल्नमा चतुर हुनसक्छ ।कर्मेश एघारौं भावमा भए जातक मानी, धनवान्, दीर्घायु एवम्माताबाट पूर्णप्रेम पाउने हुनसक्छ ।कर्मेश बाह्रौं भावमा भए जातक बाल्यावस्थामा मातृप्रेम रहित, सुकर्मकारी,राजकर्मचारी एवम् दशमेश पापग्रह भए जातक विदेशवासी हुनसक्छ ।

## द्वादशभावस्थ लाभेश

एघारौं भावमा भएको अड्कको स्वामी फल एकादशेश जसलाई लाभेश पनि भनिन्छ लग्नमा भए जातक अल्पायु, शूर, दानी, लोकप्रिय, सुन्दर एवम् तृष्णारोगी हुनसक्छ ।लाभेश दोस्रो भावमा भए जातक प्राप्त सुख भोग्ने स्वल्पाहारी,अल्पायु हुनसक्छ । पापग्रह भए अर्काको काम गर्ने, रोगी, शुभ ग्रह भए धनवान् हुनसक्छ ।लाभेश तेस्रो भावमा भए जातक बन्धु-स्त्रीपालक, उत्तम बन्धुबाला,सुन्दर, शत्रु परास्त गर्ने हुनसक्छ ।लाभेश चौथो भावमा भए जातक दीर्घायु, पिताभक्त, एक समयमा एउटा काम गर्ने, आफ्नो धर्ममा रत एवम् कार्यमा लाभ गर्नेवाला हुनसक्छ ।लाभेश पाँचौं भावमा भए जातक पितातुल्य रूप गुणवाला,पिता-पुत्रमा परस्पर प्रेमवाला एवम् अल्पायु हुनसक्छ ।लाभेश छैटौं भावमा भए जातक दीर्घरोगी, शत्रुयुक्त, पापग्रह भए परदेशमा चोरद्वारा मरण हुनसक्छ ।लाभेश सप्तम भावमा भए जातक तेजस्वी, सुशील, सम्पत्तिवान्,उच्चपद पाउने, दीर्घायु एवम् पत्नीभक्त हुनसक्छ ।लाभेश अष्टम भावमा भए जातक अल्पायु रोगी पापग्रह भए जिउँदैमा पनि मरेसमान दुःखी हुनसक्छ ।हुनसक् लाभेश नवौं भावमा भए जातक बहु विषयज्ञाता, शास्त्रनि धर्मात्मा, देव गुरुभक्त हुनसक्छ । तर पापग्रह भए बन्धु एवम् नियम हुनसक्छ ।एकादशेश दशौं भावमा भए जातक माताको भक्त, पिताको दीर्घजीवी, धनवान् एवम् माताको सेवा गर्नेवाला हुनसक्छ ।लाभेश एघारौं भावमा भए जातक दीर्घायु, पुत्र-पौत्रले युक्त, सुक सुशील, लोकमा प्रधान, सुन्दर एवम् विख्यात हुनसक्छ ।एकादशेश बाह्रौं भावमा भए जातक प्राप्त सुख भोग्ने, स्थिरचित रोगी, उत्पाती मानी, दानी एवम् सुखी हुनसक्छ ।

# द्वादशभावस्थ द्वादशेश

बाह्रौं भावमा भएको अङ्कको स्वामी फल द्वादशेश जसलाई व्ययेश (खर्चेश) पनि भनिन्छ लग्नमा भए जातक विदेशवासी, प्रियवक्ता, सुन्दर, नीचको सङ्गले दोषी, अविवाहित अथवा नपुंसक हुनसक्छ ।व्ययेश दोस्रो भावमा भए जातक कृपण, कटुभाषी, शुभ ग्रह भए राजा, चोर या अग्निबाट मृत्यु हुनसक्छ।व्ययेश तेस्रो भावमा पापग्रहको रूपले भए जातक बन्धहीन र शुभग्रहको रूपले भए धनवान्, थोरै सहोदरवाला, कुटुम्बसँग टाढा रहने हुनसक्छ । व्ययेश चौथो भावमा भए जातक कृपण, रोगी, सुकर्मी, पुत्रको कारण सन्तप्त हुनुपर्ने एवम् दुःखी हुनसक्छ व्ययेश पाँचौं भावमा पापग्रहको रूपले भए जातक सन्तान रसामर्थ्यहीन तथा शुभ ग्रह भए सन्तानवान् एवम् पिताको धनको भोगी हुनसक्छ ।व्ययेश छैटौं भावमा पापग्रहको रूपले भए जातक कृपण,अथवा बाल्यावस्थामा मृत्युतुल्य कष्ट भोग्नेवाला हुनसक्छ ।नेत्ररोगी व्ययेश सातौं भावमा भए जातक दुष्ट स्वभाव, दुश्चरित्र, बोल्नमा चतुर, पापग्रह भए आफ्नी स्त्री र शुभ ग्रह भए वेश्याद्वारा मरणतुल्य दु:ख पाउने हुनसक्छ ।व्ययेश आठौं भावमा पापग्रहको रूपले भए जातक अर्काको काम गर्ने, उद्योगहीन, लोकद्रोही तथा शुभ ग्रह भए धनसङ्ग्रह गर्नेवाला हुनसक्छ ।व्ययेश नवौं भावमा शुभ ग्रहको रूपले भए जातक तीर्थाटन गर्नेवाला र पापग्रह भए व्यर्थको खर्च गर्नेवाला हुनसक्छ ।व्ययेश दशौं भावमा भए जातक परस्त्री - विमुख, पवित्र हृदय,पुत्रवान्, धनसङ्ग्रही हुनसक्छ । तर उसकी माता कटुभाषिणी हुनसक्छिन् ।व्ययेश एघारौं भावमा भए जातक धनवान्, चिरञ्जीवी, उत्तम स्थानमा बस्नेवाला, दाता, विख्यात एवम् सत्यभाषी हुनसक्छ ।व्ययेश बाह्रौं भावमा भए जातक सम्पत्तिवान्, ग्रामको निवासले सुखी,कृपण, पशुसङ्ग्रही एवम् पूर्ण आयु जीवित रहे गाउँको मालिक हुनसक्छ ।विचारणीय कुरा - छैटौं, आठौं तथा बाह्रौं भावको भावेशले अथवा ती स्थानमा बसेका ग्रहहरूले प्राय हानि नै गर्छन् । त्यहाँ शुभ ग्रहको अवस्थिति अथवा दृष्टि हुँदा कम तथा पापग्रह या पापग्रहदृष्ट भए बढी हानि गर्छन् ।यी ३ स्थानमा शुभ ग्रह भन्दा प्रायः पापग्रह बसेको राम्रो मानिन्छ।

# लेखको परिचय




## ज्योतिषर्चाय बिष्णु प्रसाद पौडेल

नाम:- बिष्णु प्रसाद पौडेल
जन्म स्थान:- शितगङ्गा ४ जसरामे अर्घाखाँची
जन्म मिती:- २०५९/१२/२४
जन्म समय:-१८:००
पिता:-गुणानिधी पौडेल
माता:- गिता पौडेल
शिक्षा:- ज्योतिष तथा वास्तु रत्न र हस्त रेखा कर्मकाण्ड इत्यादि।

सजिलो ज्योतिष सङ्ग्रह